# भन्नुपर्ने कुरा

*धेरै कुराहरु कथाजस्ता लाग्छन अनि धेरै कथाहरु कुराजस्ता लाग्छन् । २०५० को दशकमा देखेका, भोगेका, सुनेका र अनुमान गरेका धेरै कुराहरु कागजमा कोर्ने गरेको थिएँ र लेखेका कुराहरु लघुकथा, छोटा कथा र कथाको नामबाट विभिन्न पत्रपत्रिकामा प्रकाशित पनि थिए. छरिएका त्यस्ता कथाहरुलाई संग्रह गर्ने क्रममा यो डिजिटल पुस्तक तयार भएको हो. मलाई साहित्यको दर्शन, नियम, सिद्धान्त र वाद थाहा छैन र मनका कुराहरु शब्दमा उतार्न ति सबै जान्न आवस्यक पनि ठान्दिन । धेरैको लागि मैले लेखेका कथाहरु कथाजस्ता लाग्दैनन् होला, त्यसैले पुस्तकको नाम अकथा राखिएको हो । अलि धेरै कथाहरु राखेर डिजिटल पुस्तक बनाउने सोच थियो तर धेरै सुवेच्छुकहरुले पुस्तक नै छाप्न सल्लाह दिनुभएकोले यो संग्रहमा पुर्व प्रकाशित कथाहरु मात्र राखेको छु. शुद्धाशुद्धिमा पक्कैपनि समस्या होला, पुस्तक छाप्दा त्यसलाई सच्चाउने नै छु । २० वर्ष पहिले लेखेका कथाहरुलाई त्यहि समयमा पुगेर पढिदिनुहुनेछ भन्ने विस्वास छ ।*

२०८० माघ १

लेखक

# विषयसूची

# १

# अब्यक्त सम्बन्ध

शहरको एक छेउमा छ त्यो चियापसल । शहरबाहिर भएकोले ग्राहकहरू त्यति आउँदैनन् । नजिकै रहेको एउटा पुरानो छापाखाना, फर्निचर उद्योग अर्को एक प्राय बन्द रहने कारखानाका कामदारहरु नै चिया पसलका ग्राहकहरु हुन् ।

चिया पसल्नी ठुल्दिदी । ठुल्दिदीले चिया पसल चलाउन थालेको दश वर्षभन्दा बढी भयो अनि उनले आफ्नो लोग्नेको मुख देख्न नपाएको त्योभन्दा धेरै भयो । दिदीको लोग्ने कहिले बम्बईमा देखिन्छ रे अनि कहिले पन्जाबतिर बरालिन्छ रे ! दिदीले यस्तै खबर सुन्दै आएकी छन् ।

दिदीको एउटी छोरी छे– अर्चना । पसलभन्दा १–२ वर्ष मात्र जेठी छे अर्चना । अर्चना त्यही चिया पसलमा हुर्कदै छे । सलक्क परेको जिउ सुकोमल मुहार, मुस्कुराइरहने बानी सिनेमाकी हिरोइन जस्तै छ रे ऊ पसलमा चिया नास्ता खान आउनेहरू त्यस्तै भन्छन् ।

बिहान सबेरै ठुल्दिदीको पसलमा चियानास्ता खानेहरू आउँछन् । अर्चनाले आमालाई सघाउँछे । दिउँसो अर्चना स्कुल जान्छे । साँझपख उसको पसलमा अलिअलि लोकल रक्सी पनि बिक्छ । रक्सी खानेहरू मात्तिएका हुन्छन् भनेर ठुल्दिदीले अर्चनालाई पसलमा आउन दिन्नन् । साँझपख ऊ पसल छेबैको कोठामा बसेर पढ्छे, टि भी हेर्छे । मनपर्ने मान्छेहरू भए कहिलेकाहीं ऊ चिया पसलमा निस्केर आमालाई सघाउँछे ।

अर्चना सानैदेखि चुल्बुले थिई अनि राम्री पनि थिई । छापाखानाको कम्पोजिटर, फर्निचरको मिस्त्री र राइस मिलको ड्राइभर लगायत धेरैजनाले अर्चनालाई औधी मन पराउथे । काखमा राखेर म्वाई खान्थे, काँधमा राखेर यताउता डुलाउँथे । अर्चना कसैको लागि खेलौना बनेकी थिई, कसैको छोरी बनेकी थिई अनि कसैको लागि बाल्यकालको सम्झना बनेकी थिई ।

अर्चना बिस्तारै यौवनावस्थाका प्रारम्भिक खुड्किलामा उभिएकी छे । शरीरमा यौवन फर्किदैछ । उसलाई लाज लाग्न थालेको पनि ५÷ ६ वर्ष भैसक्यो । अचेल उसलाई म्वाई खाने कुरा गर्दा पनि शरीरभरि काउकुती लाग्छ, कसैले उसको शरीरमा छुँदा पनि उसलाई अनौठो भयको अनभूति हुन्छ । अचेल पनि चिया पसलका ग्राहकहरूले पहिले नै काखमा नराखे पनि छेवैमा बसाल्न खोज्छन् , म्वाई खाने कुरा गर्छन् । नजाने झैं गरि शरीरमा मुसार्न पनि खोज्छन् तर ऊ अचेल ती कुरादेखि तर्किएर भाग्छे ।

अर्चना बढेपछि दिदीको व्यापार पनि बढ्न थालेको छ । बिहान र साँझपख अलि बढी नै ग्राहकहरूको चहलपहल हुन्छ ।

“ ठुल्दिदी, अर्चना भान्जी छैनन् ?“ एका बिहानै चिया खान आउने बुढो मिस्त्रीले अर्चनालाई नदेख्दा सोध्छ ।

“ अर्चना नानीलाई सन्चै तो छ ?“ यताउति हेर्दै छापाखानाको कम्पोजिटरले पनि सोध्छ ।

“ हैन हाम्री सानी छोरी कता गई, नाकमुखै देख्न पाइन्न त ? कहिलेकाहीं अर्चनालाई देख्न नपाउँदा फेक्ट्रीको पालेले पनि सोध्छ । सबैले अर्चनालाई माया गरिदिदा ठुल्दिदीलाई साह्रै खुशी लाग्छ । उनले पनि त अर्चनालाई

साह्रै माया गर्छिन् । माया नगरेर पनि के गर्नु आखिर उनको आफ्नो भन्ने नै को छ र यो शहरमा ?

नजिकैको छापाखानाले नयाँ रुप फेरेको छ । छापाखानामा अखबारहरू छापिन्छन् त्यसैले त्यहाँ पहिलेभन्दा बढी नै मानिसहरु आउँछन् । समाचार लेखेहरु विज्ञापन दिनेहरु, पैसा उठाउने र माग्नेहरू अरू कोको हो, कोको । अर्चनाले सबैलाई चिन्दिन । छापाखानाका सबैजनाले उसकै पसलमा चिया नास्ता खान्छन् । चिया खान आउने पत्रकारहरूले देश विदेशका कुरा गर्छन् रमाइला कथा भन्छन्, कविता पनि भन्छन् । उनीहरूका कुरा नबुझे पनि कुरा सुन्न अर्चनालाई रमाइलो लाग्छ । कहिलेकाही त् राम्रा कुरा गर्ने ती पत्रकारहरू टेबल ठटाएर झगडा गर्छन् त्यसबेला भने अर्चनालाई निकै डर लाग्छ ।

ठुल्दिदीको चिया पसलका एउटा ग्राहक थपिएको छ । ऊ कम बोल्छ तर धेरै लेख्छ रे ! ठुल्दिदीले यस्तै सुनेकी छन् । छेवैको छापाखानामा काम गर्छ ऊ । ऊ पत्रकार हुनुपर्छ– बोलीचालीबाट ठुल्दिदीले यस्तै लख काटेकी छन् । ठुल्दिदीले नाम पनि थाहा पाएकी छन् (योगेन्द्र हो रे उसको नाम ।

योगेन्द्र अर्थात ठुल्दिदीको नयाँ ग्राहक चियापसलमा आउन थालेपछि ठुल्दिदीमा अनौठो खुशीको अनुभूति भएको छ । ठुल्दिदिले योगेन्द्रलाई देखेपछि आफ्ना पुराना दिनहरू सम्झन थालेकी छन् । योगेन्द्र जस्तै थियो रे ठुदीदीको भाई । ठुल्दिदी बिहे गरी भागेर आउँदा भाइ सानै थियो । अहिले ऊ कत्रो भएको छ ? ठुल्दिदीलाई थाहा छैन । माइती नगएको पनि १३–१४ वर्ष भैसक्यो । भाइसँग भेट्ने रहर योगेन्द्रलाई देखेपछि पूरा भए झैं लागेको छ । ठुल्दिदीलाई माइती भेटे झैं लागेको छ । त्यसैले खुशी छन् उनी ।

"दिदी.." पहिलो पटक उनको पसलमा आएर योगेन्द्रले बोलाएको थियो । वर्षौं पहिले उनको भाइले पनि त्यसैगरी उनलाई बोलाउथ्यो । त्यही सम्झेर उनका आँखा रसाएका थिए त्यसबेला ।

"म तपाँइलाई भाइ भन्छु है ?" एकपटक डराइडराइ ठुल्दिदीले योगेन्द्रलाई प्रस्ताव राखेकी थिइन् । स्वीकृतिमा योगेन्द्रले केही नबोली टाउको हल्लाएको थियो । ठुल्दिदिको लागि त्यो दिन निकै खुशीको दिन बनेको थियो ।

योगेन्द्र दिनमा एकपटक मात्र ठुल्दिदीको चिया पसलमा आउँथ्यो, बाँकी समयमा धेरै पटक उसलाई छापाखानाभित्रको उसको अफिसमा चिया पु¥याउन दिदी आफै जान्थिन् । अफिसमा योगेन्द्रसँग कुराकानी हुँदैनथ्यो तर पनि ठुल्दिदी खुशी हुन्थिन् । योगेन्द्रलाई देख्दा उनले त्यो शहरमा भरोसा र सुरक्षाको महसुस गर्न थालेकी थिइन् ।

अर्चनाले आफ्नो बाउलाई कहिल्यै देख्न पाइन । ऊसँग आफ्नो बाबुको एउटा धमिलो सादा फोटो छ अनि आमाको मुखबाट सुनेका वा सम्बन्धी केही वर्णनहरु । अर्चनाको बाबु होचा र मोटा थिए, कम बोल्थे, मिठो गरी हाँस्थे, आँखा निकै राम्रा थिए, ओठमाथि बाक्ला जुँगा थिए । उसले यस्तै सुनेकी छे । योगेन्द्रलाई पहिलो पटक देख्दा उसलाई आफ्नो आमाले वर्णन गरेको उसको बाउ झैं लागेको थियो । उसले चिया पकाउने निहुँमा पहिलोपटक योगेन्द्रलाई लुकीलुकी हेरेकी थिई ।

"आमा, हाम्रा बा कस्तो हुनुहुन्थ्यो ?" धेरै पटक सोधिसकेको प्रश्न त्यसदिन अर्चनाले आफ्नो आमालाई सोधेकी थिई । अनि आमाले पनि पहिले आफ्नो लोग्नेको बारेमा वर्णन गरेकी थिइन् ।

“पत्रकार अङ्कल जस्तै हुनुहुन्थ्यो ?’ सकारात्मक उत्तरको अपेक्षा गर्दै अर्चनाले सोधेकी थिई । यस्तै देखिनुहुन्थ्यो तर यति अग्लो हुनुहुन्थेन ।’ ठुल्दिदीले भनेकी थिइन् तेरो मामा भने ठ्याक्कै यस्तै भएको छ होला कहाँ होला कुन्नी ? सानोमा सँगै हुर्केको भाइलाई सम्झेर लुकेर आँसु झारेकी थिइन् । अनि अर्चनाले आफूले देख्न नपाएको बाबुलाई सम्झेर रोएकी थिई । त्यसरात भरी दुबैले एक अर्कालाई अँगालेर सुते तर निन्द्रा भने दुवैलाई लागेन ।

योगेन्द्रको आगमन अर्चनालाई राम्रो लागेको थियो । योगेन्द्र चिया पसलमा पुग्दा अर्चनाले सबै काम छोडेर उसैलाई हेरिरहन्थी । अर्चना चाहन्थी– अरुको बाउले झैं योगेन्द्रले उसलाई माया गरोस् , काखमा राखेर टाउकोमा स्नेहका हातहरू घुमाओस् अनि कतै घुम्न लैजाओस् । यही चाहनामा अर्चना योगन्द्रको अगाडि पर्थी तर यी क्रा योगेन्द्रलाई भन्न उसले सकेकी थिइन । योगेन्द्रसँग राम्रो उठबस र बोलचाल नभएपनि अर्चना खुशी नै थिई । योगेन्द्रलाई हेरेर अर्चनाले मनमनै भन्थी (मेरा बा यस्तै हुनपर्छ ।

योगेन्द्र फेरि एकपटक झस्किएको थियो । घरदेखि धेरै टाढा आउँदा पनि उसले आफ्नो अतीत रत्तिभर भुल्न पाएन । अर्चनालाई देख्दा उसलाई आफ्नी प्राणप्यारी गायत्रीको झझल्को लागेको थियो । योगेन्द्रकी गायत्री ठ्याक्कै अर्चना जस्तै थिई । सेतो सर्ट, निलो फ्रक लगाएर स्कुल जाने गायत्रीलाई योगेन्द्रले अर्चना जत्रै हुँदा भेटेको थियो । गायत्रीले यौवनमा पाइला नटेक्दै अनि योगेन्द्रले प्रेमको अर्थ नजान्दै दुवै जना एक अर्काप्रति मोहित भैसकेका थिए । दुवै जनाले एकै साथ स्कूल छोडे । क्याम्पस

पढ्दासम्म उनीहरूको प्रेम सम्बन्ध निकै गाढा भयो । एकदिन योगेन्द्रले गायत्रीलाई सुटुक्क बिहे गरेर आफ्नो घरमा ल्यायो । तर बिहे धेरै दिन टिक्न पाएन । गायत्रीलाई उता माइतीले छुटाएर अन्तै पु¥याए । योगेन्द्र एक्लै भयो । वर्षौंसम्म ऊ पागल भै भयो । सम्हालिदा पनि उसको मनमा गायत्रीको सम्झना ताजै थियो । अझ अर्चनालाई देख्दा उसलाई पुराना घटनाहरू एक एक गरी याद भयो । उसले अर्चनाभित्र गायत्री देख्यो । योगेन्द्रलाई अर्चनाको भर्खर फक्रन लागेको बैंसमा भएकी गायत्री झैं लाग्यो । ठुल्दिदीको चियापसलमा गएको बेलामा उसले चोर आँखाले अर्चनालाई खोज्थ्यो । अर्चनासँग बोल्न खोज्थ्यो तर गायत्रीका आफन्तले उसंग गरेको व्यवहार सम्झेर ऊ झस्कन्थ्यो । अर्चनालाई हेर्दै ऊ कहिले काँही बबराउथ्यो (गायत्री तिमी फेरि किन मेरो जीवनको आएकी?

समय यात्रा जारी थियो अनि ठुल्दिदीको चिया पसल पनि । ठुल्दीदीसँग छिल्लिन खोज्नेहरूको कमी थिएन, अर्चनाको शरीर स्पर्श गर्न चाहनाका पनि कमि थिएन । त्यसो त एक कप चिया मात्र खानको लागि ठुल्दिदीको चिया पसलमा जानेहरू पनि प्रसस्तै थिए । योगेन्द्र अर्चना र दिदीको सम्बन्ध उस्तै थियो । अर्चनाले आफ्नो मनको चाहना योगेन्द्र सामु व्यक्त गर्न सकेकी थिइन । योगेन्द्र गायत्रीको छायाँबाट बँच्न चाहन्थ्यो त्यसैले ऊ सकेसम्म अर्चनाको सामु पर्न चाहन्नथ्यो । ऊ चिया पसलमा कमै जान्थ्यो, धेरैजसो उसले आफ्नै अफिसमा चिया मगाउथ्यो । कहिले ठुल्दिदी चिया लिएर पुग्थिन् भने कहिले अफिसकै पियनले ल्याउँथ्यो । कहिलेकाही अर्चना जान्थी । किन हो कुन्नी, अर्चनालाई देख्ने बित्तिकै योगेन्द्र आत्तिन्थ्यो । कहिलेकाँही त सन्चो बिसन्चो सोधिहाल्थ्यो कहिले भने टाउको उठाएर पनि अर्चनालाई हेर्दैनथ्यो ।

“ अर्चनालाई सन्चो छैन “ एक दिन चिया छोड्न जाँदा ठल्दिदीले खबर छोडिन् ।

’ओह..“ योगेन्द्र छट्पटायो .

साँझपख योगेन्द्र आफै ठुल्दिदीको चिया पसलमा पुग्यो ।

“आज कताबाट साँझपख यता बाटो लागेछ“ ? कहिलेकाहीँ बिहानपख मात्र आउने योगेन्द्रलाई फरक समयमा पसलमा देखेर ठुल्दिदीले हाँस्दै भनिन ।

एक कप चिया खाऊँ कि भनेर ? योगेन्द्रले पनि जबर्जस्ती बोलीमा मुस्कान मिसायो ठुल्दिदीले चिया पकाउन थालिन् । योगेन्द्रले अर्चनालाई चोर आँखाले खोज्यो, तर कतै देखेन ।

“ अर्चना खै त ?“ आखिर उसले ठुल्दिदीलाई सोध्यो ।

“४÷५ दिनदेखि सन्चो छैन । टाइफाइड भएको छ रे । साह्रै गलेकी छे कोठामा सुतेकी थिई, निदाएकी छे कि?“ ठल्दिदीले एकै सासमा सबै कुरा बताइन् । योगेन्द्र अर्चना सुतेको कोठामा गयो । एउटा पुरानो पलंगमा अर्चना निकै अस्तव्यस्त भएर सुतेकी थिई । कपाल जीङ्ग्रिङ्ग थियो । लगाएका कपडाले मुस्किलले लाज छोपेका थिए । धेरै दिनको बिरामीले गर्दा अर्चनाको अनुहार फुङ्ङ उडेको थियो । अर्चना निदाएकी थिई त्यसैले उसले योगेन्द्रलाई देखिन । योगेन्द्रले ढोकामै उभिएर अर्चनालाई हेरिरह्यो । अर्चना उसलाई बिछट्टै राम्री लाग्यो, ठ्याक्कै गायत्री जस्तै ।

चिया पिएर योगेन्द्र फर्क्यो ।

“ योगेन्द्र आएका थिए ।” साँझपख ठुल्दिदीले अर्चनालाई सुनाइन् ’तँलाई हेर्न आएका रैछन्, सन्चो नभएको थाहा पाएर । योगेन्द्र अर्थात् आफ्नो

कल्पनाको बाउ आएको खबरले अर्चना खुशी भई तर उसलाई हेर्न नपाएकोमा भने अर्चनालाई थक्क थक्क लाग्यो ।

भोलि म अफिस गएर पत्रकार अकललाई भेट्छु अर्चनाले मनमनै भनी

भोलि योगेन्द्र भाइलाई भनेर अर्चनालाई राम्रो अस्पताल लैजानु पर्ला ।( ठुल्दिदीले योजना बनाइन् ।

अर्चनालाई हेरेर फर्केपछि योगेन्द्रको मनमा छटपटी भैरह्यो । रातभरी उसले गायत्रीलाई सम्झिरह्यो. गायत्रीसंग बिताएका रमाइला क्षणहरु उसको आँखा वरिपरी नाचे अनि गायत्रीसंग छुट्टिनु पर्दाका पीडादायक क्षणहरु पनि उसले महसुस ग¥यो ।

“भोलि दिनभरि गायत्रीसँग बस्छु । ” उसले राति योजना बनायो ।

भोलिपल्ट बिहानै योगेन्द्र चिया खाने गरी ठुल्दिदीको पसलमा पुग्यो ।

“ कस्तो छ उनलाई ? ” बाहिरबाटै योगेन्द्रले सोध्यो ।

अनुहार उज्यालो देखिएको छ । हिजो तिमी आएको कुरा सुनेर खुशी भएकी छे ।’ ठुल्दिदिले नढाँटी भनिन् .

“चिया पकाउनुभएको छैन ?’ योगेन्द्रले सोध्यो ।

“ हिजो ग्यास सिद्धियो, नजिकमा रहेनछ, बजारमै जान पर्ने भयो ।’ ठुन्दिदीले समस्या बताइन् ।

योगेन्द्र केही बोलेन ।

तिमी बस्दै गर म सिलिण्डर लिएर आउँछु । ठुल्दिदीले आफ्नै भाइलाई झैं आदेश दिइन्

"आज खाना यतै खानुपर्छ है ।"

खाली सिलिण्डर लतार्दै ठुल्दिदी बाहिर निस्किन् । योगेन्द्रले बोल्ने मौका पाएन वा भनौं बोल्ने आवश्यकता नै ठानेन ।

योगेन्द्र अर्चनाको कोठामा गयो । कोठामा केही परिवर्तन आएको थियो । कोठाका सामानहरू व्यवस्थित थिए । पलङमा कपडाहरू मिलाएर बिच्छ्याइएको थियो । अनि पलङमा सुकिला कपडा लगाएर अर्चना सुतेकी थिई । आज उसको अनुहार उज्यालो देखिएको थियो । साँच्चै भन्ने हो भने ऊ हिजोभन्दा निकै राम्री देखिएकी थिई ।

योगेन्द्रलाई देखेर अर्चना उठ्न खोजी ।

तर योगेन्द्रले उठ्न दिएन । अर्चना सुतेको पलङको एक छेउमा योगेन्द्र बस्यो । धेरैबेरसम्म दुवैले एक अर्कालाई हेरिरहे मात्र केही बोलेनन् ।

"कस्तो छ तिमीलाई ? "योगेन्द्रले मौनता तोड्यो ।

" तपाई सन्चै हुनुहुन्छ? अर्चनाले उल्टै प्रश्न गरी ।

योगेन्द्रले अर्चनाको निधार छाम्यो ज्वरो अझै थियो । उसले अर्चनाको टाउकोबाट हात हटाएन, विस्तारै अर्चनाको मैलो कपाल खेलाइरह्यो । योगेन्द्रले टाउकोमा हात राख्दा अर्चनाले अनौठो अनुभव गरी । उसलाई आफ्नै बाउ आएर नजिक बसेझैं लाग्यो । योगेन्द्रले छुँदा उसलाई डर लागेन । छापाखानाको कम्पोजिटर, पाले , फर्निचरको मिस्त्रीले छुँदा झैं शरीर सिरिङ्ग पनि भएन, अनि काउकुती पनि लागेन । अर्चनाले आफूलाई

निकै हलुका महसुस गरी । उसलाई अपनत्वको अनुभूति भैरहेको थियो अनि स्वर्गीय आनन्द प्राप्त गरेझैं लागिरहेको थियो । अर्चनाले जीवनमा पहिलो पटक यस्तो खुशीको महसुस गर्न पाएकी थिइ ।

अर्चनाले खुशी थाम्न सकिन । आँखाबाट बररं आँसु झरे । गालाबाट तपतप गर्दै सिरानीमा आँसु झ¥यो ।

आफले नदेखेको आफनो बाउलाई सम्झेर अर्चना रोइरही । योगेन्द्रसँग छुट्टिनुपर्दा गायत्री यसैगरी रोएकी थिई । योगेन्द्रले अर्चनालाई गायत्री देख्यो, उसलाई गायत्री रोएझैं लाग्यो । मन थाम्न सकेन । उसको आँखा रसाए. आँखाका डिलले आँसुको भेल रोक्न सकेनन् ।

“तिमी नरोउ न..“ योगेन्द्रले वाक्य पूरा गर्न सकेन । अर्चना झन सुक्कसुक्क गर्दै रून थाली ।

योगेन्द्र विस्तारै अर्चनाको आँखा पुछिदियो । ढोकामा फैक्ट्रीको पाले उभिएको रहेछ । अर्चना र योगेन्द्रले देखेनन् तर पालेले भने योगेन्द्र अर्चनामाथि ढल्केर म्वाई खान लागेझैं देख्यो ।

“अर्चनाले हामीलाई हात समात्नसमेत दिन्न तर योसँग भने.........“ पहिलेका कुरा सम्झेर पाले मुर्मुरियो ।

“आज योगेन्द्र भाइलाई मासु ख्वाउनु पर्छ ।“ठुल्दिदीले बजारबाट फर्कदा सोचिरहेकी थिइन् ।

योगेन्द्र र अर्चनाको सेखी झार्नुपर्छ आज– बुढो पालेले योजना बनाइरहेको थियो ।

पाले बाहिर निस्केर चिच्याउन थाल्यो– ’लौ न हजुर यी आँखाले के देखु प¥यो, पापीले बिरामी बच्चीलाई समेत बाँकी राखेन । लौ न गुहार...“

क्षणभरमै ठुल्दिदीको चियापसल वरिपरि मान्छेहरु जम्मा भए ।

ठुल्दिदीले भाइलाई ख्वाउने मासु किन्दै थिइन् अनि कोठाभित्र अर्चनाले बाउको मीठो स्पर्श महसुस गर्दै थिई अनि योगेन्द्र गायत्रीलाई सम्झेर आँसु झार्दै थियो । यी तीन प्राणीलाई बाहिर के भैरहेको छ भन्ने पत्तै थिएन ।

...................................

२

# मेरी छोरी र तीन दृष्टिहरू

दृष्टि नं १ : सुभदी

सुभदी कहिलेदेखि मेरो जीवनमा आइपुगी ?– त्यो मलाई अहिले राम्रो सम्झना छैन । मलाई यतिसम्म याद छ– मैले उसलाई भेट्दा सानी सिंगाने केटी थिई । मैले भर्खर एस एल सी पास गरेर स्कुलमा जागिरे हुन पुग्दा ऊ जीवनको गोरेटो कोर्न स्कूलमा पाइला टेकेकी थिई । कहिल्यै घर नछोडेकी आमाको काखमा खेलेकी सुभदी स्कूलको नौलो परिवेशमा निकै आत्तिएकी हुन्थी अनि म भर्खर विद्यार्थीबाट माडसा'व भएर दिनभरि जागिर खानुपर्दा निकै छट्पटाएको हुन्थें ।

सुभदी र मेरो लागि स्कूल निकै बेस्वादिलो उराठलाग्दो हुन्थ्यो । मैले अध्यापनमा आफूलाइ अभ्यस्त बनाउन विद्यार्थीहरूसँग नै रम्न खोज्थें । भर्खर स्कूलमा पाइला टेकेका साना केटाकेटीहरूलाई पढाउथें , उनीहरूका कुरा सुन्थँे नचाउथँे र नाच्थें । साँच्चै म उनीहरूको सामु आफ पनि केटाकेटी भएको थिएँ ।

सभदी किन मसँग नजिक भई त्यसको खासै कारण त थाहा छैन । उसको घर र मेरो डेराको बाटो एउटै थियो । प्रायः जसो सँगै स्कुल आउने जाने गर्दथ्याँै । सुभदी म जस्तै दुब्ली पातली थिई । उमेरमा बाउ–छोरी भन्न नसुहाए पनि कसैकसैले सुभदीलाई मेरी छोरी भनिदिन्थे । नजानिदो किसिमले ऊ मेरी छोरी बनी । अरुले भन्दाभन्दा मेरो मनले उसलाई छोरी मान्न थाल्यो ।

बिरानो शहरमा आफ्नो भन्ने सुभदी मात्र हो जस्तो लाग्थ्यो । स्कूलमा मात्र होइन बाहिर पनि सुभदी मसँगै हुन्थी ।

“यो त सरकै छोरी भएर जन्मिनुपर्ने, झुक्किएर हाम्रो घरमा जन्मिछ ।” उसका आमाबाले बारम्बार भन्थे ।

’म अब सरकी छोरी भएर जन्मिन्छु है’ सुभदीले बालसुलभ भावमा भन्थी ।

समय बगिरह्यो । यात्राहरू फेरिदै गए सुभदीसंगै मेरो अध्ययन र अध्यापन तह पनि बढ्दै गयो सुभदी जत्री भए पनि सम्बन्ध उस्तै रह्यो । सुभदीले १० कक्षा पास गरेपछि मलाई समयको याद भयो । समय निकै बितिसकेछ । सुभदीले स्कूल छोड्दा मलाई नरमाइलो लाग्यो । सुभदीले स्कुलमा विदाइको अविर र माला लगाउदा मलाई ऊ पराई घर जान लागे झैं लाग्यो । साँच्चै त्यसदिन मेरो मन छोरीलाई अन्माएर होलीमा चढाएर पठाउन लागेको बाको भै थियो । मनभित्रभित्रै द्रवित थियो ।

मेरी छोरी सुभदी अब पराई हुने हो कि भन्ने अज्ञात भयले मन निकै आत्तिएको थियो ।

दृष्टि नं. २ : म

शुरुका केही दिन सुभदीलाई स्कूल जान दिक्क लागेपनि पछिपछि उसलाई स्कूल रमाइलो लाग्न थाल्यो । स्कूलमा उसले यौटा ’सर’ भेटाएकी थिइ जो उसकै बोली बोल्थ्यो । उसलाई कथा सुनाउथ्यो, लेख्न पढ्न सिकाउथ्यो अनि कहिलेकाही संगै खेल्थ्यो पनि त्यो सर सुभटीको साथी बनेको झण्डै

वर्षीदिनपछि शुभदीले भन्न जानेकी थिई – थन्दय थल ।  सुभदीको थन्दय थल अर्थात सन्जय सर सुभदीको मनमिल्दो मान्छे थियो । स्कुलमा सन्जय सुभदीको सर थियो । स्कुल छुटेपछि सन्जय साथी थियो ।

सुभदिलाई गाली गर्ने माया गर्ने पढ्ने सिकाउन बजार घुमाउने सन्जय नै थियो ।

सुभदीलाई चाहे स्कुलमा होस् या गाउँ टोलमा होस् साथीको जरूरत परेन अर्थात उसले साथी बनाउन सकिन ।

"सर जस्तो मान्छे साथी पाएपछि हामी किन चाहियो ?" सुभदीले आफ्ना साथीहरूका यस्ता वचनहरू सानैदेखि पचाउदै आएकी थिई । सन्जय सुभदीको अबोधपनले गर्दा साथी बनेको थियो । सुभदी वाल्यकाल छोडेर चन्चले किशोरी हुँदासम्म पनि सुभदीको साथी भी रह्यो ।

सन्जयले सुभदीलाई 'मेरो छोरी' भने पनि सुभदीले उसलाई साथी नै ठानी । सुभदी कल्कलाउदो बैंशमा टेकेको बेला युवा अवस्थाको सरलाई साथी जस्तो ठान्दा अरूहरूले धेरै कुरा पनि काटेका थिए होलान् । तर भगवानको कृपाले सुभदीका कानमा ती कुराहरू परेनन् । उसले सुनेकी भए त भन्ने मान्छेलाई काँचै निल्थी ।

समय बितिरह्यो । सुभदीले १० पास गरी स्कुलमा विदाई कार्यक्रम राखियो । सुभदीलाई लाग्यो अब सन्जय सरसँग टाढा हुनुपर्ने छ । स्कूल छाडेपछि सरले वास्ता नगर्ने पो हो कि भन्ने भय उसको मनमा उठिरह्यो । "आज मैले मेरो साथी गुमाउँदैछु " सुभदीको मनको कुनाबाट कतै यो आवाज निस्क्यो । साथी गुमाउनुपर्ने कुराले सुभदी स्तब्ध भई । उसको आँखाबाट बररं आँसु खसे ।

दश वर्षसम्म पढेको स्कुल छोड्नु परेकोले सुभदी रोई, उसले स्कुललाई खुबै माया गर्दिरहिछ – साथीहरूले लख काटे ।

दृष्टि नं. ३: हामीहरू

शुरुका दिनहरूमा उनीहरूको सम्बन्ध अनौठो लागेको थियो । हामीहरू कसैले फुल्याउन नसकेकी सुभदी सन्जय सर आएपछि आफै तह' लागेकी थिई । सन्जय सर स्कुलमा नयाँ भएकोले गर्दा साना विद्यार्थीहरूसँग बढी समय बिताउथ्यो । उसको यो व्यवहार नराम्रो 'लत' नै बन्यो ।

सुभदी सानी छँदा त उनीहरूको सम्बन्धलाई स्वाभाविक मान्न सकिन्थ्यो तर सुभदी तरुनी बनिसक्दा पनि उनीहरूको सम्बन्ध 'नजीक' रहेको कुरालाई हामीहरूले कदापि स्वाभाविक मान्न सक्दैनथ्यौं । सुभदी मेरी छोरी जस्तै हो भनेर सन्जय सरले बारम्बार हामीहरूलाई सुनाउथ्यो । तन्नेरी सन्जय सरले तरुनी हुँदै गरेकी केटीलाई 'मेरी छोरी' भन्दैमा कहाँ पत्याउन सकिन्थ्यो र ?

सन्जय सरको आड पाएकोले सुभदीले हामीहरूलाई त पटक्कै नटेर्ने भएकी थिई । सन्जयसँग त अलिअलि डराएझैं गर्थी तर हामीहरूलाई उसले गन्दै गन्दिनथी । सन्जयने 'छोरी जस्तै' भनेर हाम्रो आँखामा छारो हाल्न कोशिश गरेपनि उनीहरूले वास्तवमा अर्कै सम्बन्ध बनाइसकेका थिए ।

स्कूलमा त हजारौं विद्यार्थी थिए नि, तर सन्जय सरले सुभदीको बारेमा बढी चासो किन राख्थ्यो भन्ने हामीहरूले नबुझेको हो र ? सन्जय र सुभदीले एक अकांलाई प्रेम गर्थे । त्यही भएर त सँगै स्कुल आउने जाने गर्थे । सरले उसलाई घुमाउन पनि लैजान्थ्यो । आफ्नै विद्यार्थीसँग प्रेम गर्न कति लाज नलागेको हो ? हामीहरूले स्टाफरूममा बसेका बेलामा उसैको कुरा गर्थ्यौं ।

सुभदी राम्री थिई । 'सन्जयले जालमा राम्रै माछा फँसाएकै हो, है । आफू त उमेर ढल्केको मान्छे त्यस्तो चान्स कसरी पाउनु ?'

सुभदीले स्कुल छोड़ी । अब त सन्जय र सुभदीको बाटो खुल्यो । उनीहरूले बिहे पनि पक्कै गर्छन् उनीहरूको बिहेभोज मज्जाले खाईनेछ । अरु त ठिकै छ, तर सुभदिलाई म्याडम पो कसरि भन्ने होला ?

हामीहरु यहि प्रश्नको उत्तर खोजिरहेका छौं ।

तिलोत्तमा –८, रुपन्देही

# ३

# शंका

ललित आफ्नी भाउजु रोमिकाको साह्रै प्यारो थियो । मिठो बोलीचाली, सहयोगी व्यवहार र मिलनसार भएकोले घरमा मात्र हैन गाउँमा पनि ललितलाई सबैले मन पराउथे । रोमिकासंग बिहे गरेको एक महिनामै उनको लोग्ने रमेश विदेश गएपछि रमेशको भाई अर्थात रोमिकाको देवर ललित रोमिकाको साथि भएको थियो । उनीहरु विचमा निकै मेल थियो । खेतबारीमा जादा, बजार जादा होस् वा सिनेमा हेर्न जादा रोमिकाले ललितलाई लिएरै जान्थी । ललित नजाने हो भने उ माईत समेत जादैनथी । कतै गएर ललित आउन ढिला भयो भने रोमीका खाना नखाई कुरेरै बस्थी ।

‘ कस्तो सिता र लक्ष्मण जस्तै छन् यी देवर भाउजु’ उनीहरुलाई देखाएर टोल छिमेकमा भन्ने गर्थे ।

रोमीका भर्खर २१ वर्ष पुगेकी युवती थिइ । सुन्दर मुहार, मिलेको जिउडाल अनि फक्रदो जवानीले गर्दा निकै सुन्दर देखिन्थी । ललित भर्खर १६ वर्ष मा टेकेको थियो । भर्खर जुँगाको रेखी बसेको ललित हँसिलो त छँदै थियो, फुर्तिलो पनि उत्तिकै थियो । उसले भाउजुलाई दुखि हुनै दिदैनथ्यो । रोमीका उदास भएर वा रिसाएर बसेको भएपनि उसले जिस्काएर, फकाएर भएपनि हसाउथ्यो । भाउजुको सामुन्ने उ केटाकेटी बनिदिन्थ्यो अनि सहयोग गर्ने बेलामा अविभावक बनेर अघि सर्थ्यो । ललितमाथि रोमिकाको पुरा विस्वास थियो । उसलाई गलत सोच्न ललिताले पाप ठान्थी । त्यसैले उसले ललितसंग कहिल्यै संकोच मान्दैनथी ।

ललितले १२ कक्षाको परीक्षा दिएर बसेको थियो । मेलापातदेखि घाँस दाउरा गर्न अचेल ललित र रोमीका संगै जान्थे । प्रायः जस्तै एकदिन देवर भाउजु खेतमा घाँस काट्न गएका थिए । ललितले आफ्नो घाँसको भारी

बाँध्यो । रोमीका भने घाँस बाध्ने डोरी हातमा समातेर उभिईरहेकी थिई । भर्खरै बर्खायाम शुरु भएको थियो । आकाशमा बादल फैलिदो थियो अनि घाम पश्चिम आकाशमा अस्ताउने तरखर गर्दै थियो ।

‘खै ल्याउनुस डोरी । घाम डुब्न थालिसक्यो. भारी नबाँधेर के हेरेर उभिनु भएको होला कुन्नि?’ ललितले आफ्नो भारीतपÞर्m हेर्दै भाउजुतपÞर्m हात बढायो ।

ललितले भाउजु टाढा होलिन् भनेर ठानेको थियो । डोरी माग्दा रोमीका नजिक सरिसकेकी थिई । भाउजुततर्फ नहेरी हात बढाउदा उसका हातका औंलाले रोमिकाको छातीमा हल्का स्पर्श गर्न पुगे । ललितलाई पनि त्यो स्पर्श महसुस भयो । एक्कासि र अन्जानमा गल्ति भएको हुँदा ललित केहि बोलेन । उसले डोरी लिएर भाउजुको घाँसको भारी बाँधिदियो र दुबैजना घाँसको भारी बोकेर घर आए । सधै गफ गर्दै हिड्ने उनीहरु विचमा फर्कदा भने कुराकानी भएन ।

ललितको औंलाले आफ्नो छातीमा छुँदा उ झस्किएपनि मुहारमा भने त्यसको भाव आउन दिएकी थिइन । ‘उसले मेरो छातीमा किन छोयो? झुक्किएर हो कि जानाजान छोएको होला? ’ घर फर्कदा उसको मनमा यस्तै कुराहरु खेलिरहेका थिए ।

घर आएपछिका समय भने हिजो अस्तिका जस्तै सामान्य रहे । साँझ सुत्न जानेबेलामा आफ्नो कोठामा जानुभन्दा अघि सधैजस्तो रोमिकाको कोठाको ढोकाबाट हेरेर ’शुभ रात्री“ भनेर ललित आफ्नो कोठामा सुत्न गयो ।

रोमीका पनि ओच्छ्यानमा पल्टी ।

धेरै बेरसम्म उसलाई निन्द्रा लागेन । साँझको घटनालाई सम्झेर उसले मनमनै कुरा खेलाईरहेकी थिइ ।

'ललितले जानीजानी उसको स्तन समात्न खोजेको त हैन?' उसको दिमागमा बारम्बार यहि प्रश्न दोहोरिएको थियो ।

' ऊ पनि जवान ठिटो हो । म जस्ती जवान युवतीलाई एकान्त ठाउँमा पाउदा उसमा यौनतृष्णा जाग्यो होला । नत्र नजिक उभिएको मान्छेलाई नदेख्ने भन्ने हुन्छ र ? ' रोमिकाको मनले निष्कर्ष सुनायो । टरेको बलात्कारको घटनाले उ थरर्र काँपी ।

राती ११ बजिसकेको थियो । रोमीका अझै सुतेकी थिइन । ललित आफ्नो कोठामा बसेर एमबीबीएस इन्ट्रान्सका कोर्स पढिरहेको थियो । कोठामा बत्ति बलिरहेको देखेर रोमिकाको कोठाको ढोकाबाट चिहायो । बत्ति बलिरहेको थियो, रोमीका आफ्नो ओच्छ्यानमा त्यत्तिकै पल्टिरहेकी थिई ।

ललिताले ढोका ढक्ढकायो । रोमिकाले तर्सेर ढोकातर्फ हेरी । ढोकामा ललित उभिएको देखेर ऊ झनै तर्सि ।

' अझैसम्म सुत्नु भएको छैन. सन्चो भएन र भाउजु?' ललितले सोध्यो ।

' सन्चै छ. निन्द्रा लागेन, त्यसैले उपन्यास पढेर बसेकी थिएँ ।' रोमिकाले झुट बोली ।

पल्लो कोठामा ससुरा खोके ।

'धेरै अनिदो नबस्नुस्, सुत्नुस् अब.' ललितले भाउजुलाई भन्यो अनि फर्केर आफ्नो कोठामा गयो ।

कहिल्यै ढोकाको चुकुल नलगाउने रोमिकाले ढोका लगाएर चुकुल र काठको आग्लो समेत लगाएर बत्ति निभाएर ओच्छ्यानमा पल्टी ।

'दिनमा त मलाई समात्न खोज्नेले राती एक्लै पाउदा त्यसै छोड्छ र? अहिले सबै सुते होलान भनेर साँझ पुरा गर्न नपाएको यौन इच्छा पुरा गर्न आएको होला । मलाई जवर्जस्ती गर्न लागेको भए म के गर्थे होला? चिच्याएर प्रतिकार गर्दा लोग्ने नभएकोले देवारसंग सम्बन्ध राख्न खोजेकी तर देवरले नमान्दा हल्ला गरेकी भन्थे होला । धन्न बेलैमा ससुराले खोके र ऊ गयो । नत्र आज मेरो इज्जत लुटिने रहेछ ।.' उसको मनमा तर्कना खेले । अज्ञात भयले शरीर काँप्यो । पटक्कै निन्द्रा लागेन ।

हुन त प्रायजसो साँझ खाना खाएपछि रोमीका ललितकै कोठामा उपन्यास पढ्थी । ललित राती अबेरसम्म लेखपढ गर्थ्यो । पढ्दापढ्दै रोमीका ललितकै पलंगमा निदाउथी अनि ललित पनि पलंगकै एक कुनामा सुत्थ्यो । त्यतिबेलामा रोमिकालाई कुनै डर लाग्दैनथ्यो । अहिले भने ललितलाई देख्दा पनि उ भयभित भएकी थिई ।

मनमा कुरा खेलाउदा खेलाउदै रात छर्लंग भयो । बिहान उठेर रोमीका बाथरुम भित्र नुहाईरहेकी थिई । ऊ बाथरुमको ढोका लगाएर प्रायजसो निर्वस्त्र भएर नुहाउने गर्थी । आज पनि ऊ त्यसैगरी नुहाईरहेकी थिई ।

बाहिर बाख्राको पाठो उफ्रदै आएर ढोकामा बजारियो ।

कसले ढोका हल्लायो भनेर रोमीका झसंग भई ।

'कतै ललितले हेरिरहेको त छैन?' उसको मनले एक्कासि सोच्यो । यसले झटपट कपडा लगाएर बाहिर निस्की ।

वाहिर नुहाउन ठिक्क परेर ललित उभिएको थियो । रोमिकाको सातो गयो ।

' गुड मर्निंग भाउजु !' सदा झैं ललितले मुसुक्क हास्दै भन्यो अनि नुहाउन बाथरुम छि¥यो ।

ललितलाई बाहिर देख्दा रोमिकाले ललितले नै ढोका हल्लाएको रहेछ भन्ने सोची ।

'उसले मैले नुहाएको सधै हेर्दो रहेछ । सेतो तिघ्रा देख्दा त केटाहरुमा यौनको नशा चढ्छ भने मेरो नाङ्गो शरीर देख्दा उसलाई कस्तो भयो होला? मेरो नाङ्गो शरीर हेरेर यौनातुर भएर पो मलाई हिजो जवर्जस्ती गर्न खोजेको रहेछ । मेरो नाङ्गो शरीर हेर्न पो उ सधै मैले नुहाएपछी मात्र उठेजस्तो गरेर बाथरुम जाँदो रहेछ ।' रोमिकाले मनमा यस्तै तर्कनाहरु आए । ललितलाई सम्झेर र क्रोधित भई.

' अब म कहिल्यै निर्वस्त्र नुहाउन्न.' रोमिकाले निर्णय गरी ।.

खाना खाएर ललित इन्स्टिटच्युट गयो । रोमीका घरधन्दामा लागी । सासु ससुरा छिमेकीको पुजामा गएका थिए । घरमा रोमीका मात्र एक्लै थिई । उसको मनमा डर थियो– 'आफु एक्लै भएको मौका छोपेर ललित आएर जवर्जस्ती गर्छ कि?' त्यसैले उ निकै चनाखो भएर काम गरिरहेकी थिई ।

हिजोसम्म ललितप्रति रोमिकाको ठूलो विस्वास थियो । निकै आड मान्थी ललितलाई अनि निकै माया गर्थी । हिजोको घटनाले गर्दा सम्पूर्ण विस्वास हराएको थियो । मायाको साटो मनमा घृणा भरिएको थियो । हिजोसम्म देउता मानेको ललित आज उसको लागि राक्षस भएको थियो ।

साँझपख ललित आयो । रोमीका आफ्नै कोठामा बसेकी थिई । ललित एक्कासि कोठामा पस्दा रोमीका अक्क न बक्क भई ।

‘भाउजु हेर्नुस त दाईको पार्सल आएको छ ।’ ललितले भन्यो । ललितको हातमा सानो प्याकेट थियो ।

‘ए हो र ?’ रोमीका खुशी भई ।

‘ के रहेछ? कसले ल्याईदिएको?’ रोमीका उठेर ललितको नजिक गई । अघिसम्मको उसको मनमा भएको डर केहीबेरलाई गायब भयो ।

‘खै दिनुस त् “रोमिकाले प्याकेट मागी ।

ललित सदाजस्तै जिस्किने मुडमा थियो । त्यसैले भन्यो–’अहँ दिन्न ।’

‘खै छिटो दिनुस न भन्या ।.’ रोमिकाले प्याकेट खोस्न खोजि ।

ललितले हात माथि उचाल्यो । रोमिकाले उफ्रेर लिन खोजि , तर खोस्न सकिन ।

‘तपाई त कस्तो मान्छे ! दिनुस न भन्या । प्लिज..!’ थाकेपछि ललिताले भनि ।

‘मलाई के दिनुहुन्छ र यो पार्सल दिएमा ?’ आफ्नो स्वभाव अनुसार ललित बोल्यो ।

‘जे मागेपनि दिन्छु । पहिले पार्सल त दिनुस ।’

‘पहिले मागेको कुरा दिए मात्र..’ ललितले भन्यो ।

‘ल भैगो, तपाईले मागेको कुरा नै दिन्छु. माग्नुस त के हो?’ बोलि रोमीका ।

‘भैगो माग्दिन ’मुसुक्क हास्दै बोल्यो ललित । ’तपाईले दिनुहुन्न होला ।’

रोमिकाले तिखा नजरले ललितलाई हेरी । भाउजुलाई रिस उठाउदा ललितलाई मज्जा लाग्थ्यो । त्यसैले अहिलेपनि ललितले भाउजुलाई रिस उठाउनकै लागि पार्सल नदिएर आफ्नो कोठामा गयो ।

रोमीका केहीबेर चुपचाम उभीइरहि । केहीबेरपछि उ सरासर ललिताको कोठामा पसी । ललित लुगा फेर्दै थियो ।

एक्कासि ललितको अगाडी गैर रोमीका चिच्याउन थालि, ‘तपाईले मेरो शरीर माग्नुभएको हैन? ल खेल्नुस मेरो शरीरसंग, बुझाउनुस आफ्नो यौन तृष्णा । तपाईका हातले मेरा स्तन निचोर्नुस अनि मेरा रसिला ओठ चुस्नुहोस र आनन्द लिनुहोस् । तपाईले यहि खोजेको हैन?’

रोमिकाले बोल्दै आफ्ना कपडा पुकालिरहेको थिई । केहि बेरमै साडी, ब्याउज, पेटीकोट, ब्रा, पेन्टी भुइँमा थुप्रो लागिसकेका थिए । रोमीका ललितको अगाडी निर्वस्त्र उभिएकी *थिई* ।

ललित भाउजुले के गरिरहेकी छ र किन यसो गरिरहेकी छन् भन्ने नबुझेर वाल्ल परेको थियो । भाउजुको नाङ्गो शरीर हेर्न नसकेर उसले भुईको कपडाको थुप्रोलाई हेरिरहेको थियो ।

बुटवल, रुपन्देही

## ४

# सुनको बाला

“बाजे प्रभालाई स्कूल छोडीदेऊ है ।” स्कूलमा भर्ना गरेको भोलीपल्ट गाईवाजेलाई प्रभाको आमाले भनेकी थिईन् । गाईबाजेको हात समातेर टुकुन टकुन हिड्दै प्रभाव पहिलो पटक स्कूल गएकी थिई ।

गाईवाजे कहिलेदेखि त्यहाँ हिँड्दैछ भन्ने उसलाई थाहा थिएन । प्रभाले आँखा देख्ने भएदेखि नै गाईबाजेलाई देख्दै आएकी थिई । गाईबाजे अचम्मकै मान्छे थिए । उनले चप्पल कहिल्यै लगाउन्नथे । टाउकोमा फेटा बाँधेजस्तै गरेर कुनै न कुनै कपड़ा सधै बाँध्थे । जाडो, गर्मी जे भएपनि उनको शरीरमा यौटा लुंगी र मैलो टिसर्ट हुन्थ्यो । काँधमा लामी लठ्ठी र लठ्ठीको एक छेउमा कपडाको सानो पोको झुण्डिएको हुन्थ्यो । गाईगोरु, बाच्छा बाच्छी चराउन उनी जंगल जान्थे । उनी हिड्ने बाटो छेउछाउका सबै केटाकेटीहरुले उनलाई ’गाईबाजे’ भन्थे ।

गाईबाजे जंगल जाने र घर फर्कने समय सधै यौटै हुन्थ्यो । गाईबाजेका गाई देखेपछि सबैलाई हतार हुन्थ्यो । गाईबाजे आईसके, अबेर हुन लाग्यो ’घरधन्दा गर्ने गृहिणी, स्कूले विद्यार्थी र काममा जानेहरु हतारिन्थे । उनीहरुको लागि गाईबाजे र गाईहरु ’घडी’ जस्तै थिए ।

“गाईबाजे आउने बेला भयो, छिटो गर ।“ प्रभाको आमा विहानपख सधै प्रभालाई सम्झाउँथिन् । खाना खाईवरी चिटिक्क परेर प्रभा बाटोमा उभिन्थी र गाईबाजे आएपछि उनैसंग प्रभा स्कूल जान्थी ।

'प्रभानानी ऊ त्यो रातेले हान्छ है अगाडि नजानु... प्रभानानी तँलाई कुन गाई मन पर्छ ?....... तँ आज कति चिटिक्क परेकी... गाईबाजेले यस्तैयस्तै कुरा गर्थे, प्रभाले बुझ्दीनथी ।

“तेरो जिन्दगी कसरी बिल्ला खै ? हिड्न नभ्याउँदै थाकी हाल्छेस् ” प्रभा हिड्न नसकेको बेलामा गाईबाजेले भन्थे अनि उनले प्रभालाई आफनो चौडा काँधमा राखेर हिड्थे । प्रभाले खुट्टा हल्लाउँदै काँधमा वस्थी अनि कहिलेकाहीँ भन्थी “गाईबाजे ऊ त्यो बाच्छीलाई पनि बोक न । हेर त हिड्नै सकेन ।” गाईबाजे हाँस्थ,े प्रभाको कुरा सुनेर ।

समय बित्दै गयो । प्रभा विस्तारै ठूली हुँदै गई र गाईबाजे अझ 'पाका' हुँदै गए । प्रभाले पाँचकक्षा पास पनि गरी । गाईबाजेले गाई चराउन छोडेका थिएनन् र प्रभाले गाईबाजेको साथ छोडेकी थिइन । हो, प्रभाले गाईबाजेको काँधमा चढेर स्कूल जान भने छोडेकी थिई । गाईबाजेका गाई गोरु, बाच्छा बाच्छीले प्रभालाई चिनीसकेका थिए, त्यसैले बाटोमा हिड्दा तिनीहरुले एकपटक प्रभाको घरतर्फ अवस्य पनि हेर्थे

“बाजे तिम्रो घर कहाँ हो ?” स्कूल जाँदा प्रभाले पहिलोपटक गाईबाजेलाई सोधेकी थिइ ।

“ जहाँ बस्यो त्यहीं हो मेरो घर ।” गाईबाजेले भनेका थिए । गाईबाजेले प्रभालाई निकै माया गर्थे । विहान आउँदा उनका टेक्ने लठ्ठीमा झुण्डीएको पोकामा केही न केही खानेकुरा हुन्थ्यो । स्कूल जाने बेलामा गाईबाजेले केही न केही प्रभाको खल्तीमा हालिदिन्थे । छुट्टीको दिन प्रभासंग भेट नहुने भएकोले उनले घर नजिक गएर चिच्याउने“ प्रभा नानी आज त जान्नेस् हैन

?" आवाज सुनेपछि प्रभा बाटोमा निस्कन्थी । प्रभालाई देखेपछि मात्र गाईबाजे बाटो लाग्थे ।

समयसँगै धेरै कुरा बदलियो । बाजे बुढा र प्रभा फक्दो कोपीला भै देखिन थाली । गाईबाजेका गाईगोरुहरु धेरै फेरिए, धेरै पटक गाईगोरुको संख्यामा घटबढ भयो । घरहरु थपिए, बाटो पिच बन्यो । तर पनि गाईबाजे र प्रभाको सम्बन्ध उस्तै रह्यो ।

"गाईबाजे तिम्रो घरमा को को नी ?" गाईबाजेसँग हिडन थालेको धेरै वर्ष पछि एकदिन प्रभाले सोधी ।

गाईबाजे केही बोलेनन् ।

"भनन् गाईबाजे........" प्रभाले अनुरोध गरी । फेरी पनि गाईबाजे केही बोलेनन् । हिंड्दा हिंड्दै टक्क उभिएर उनले टाढा क्षितिजमा हेरिरहे । प्रभाले अड्डी छोडिन । बाजेलाई भन्न करै लाग्यो, वर्षौं पहिले गाईबाजेको आफ्नो घरपरिवार रहेछ, छोराछोरी रहेछन् । एकपटक हैजा फैलिदा उनको स्वास्नी, छोराछोरी सबै वितेछन् । आफन्तको वियोग सहन नसकेर धन सम्पत्ति सबै छोडेर भौंतारिदै गाईबाजे प्रभाको गाउँ भन्दा केही परको गाउँमा आएका रहेछन् । कुनै जमिन्दारको घर बसेर गाउँलेहरुको गाई चराउने र त्यसवापत गाउँलेहरुले गाईबाजेलाई अलि अलि ज्याला दिंदा रहेछन् । बाजेले आफ्नो बारेमा सबै कुरा प्रभालाई सुनाए ।

" अब त यो संसारमा मेरो आफन्त भन्नु यी गाईबाच्छा बाहेक अरु कोही छैन ।" सबै कुरा भनिसकेपछि गाईबाजेले भने यसो भन्दा बाजेको गला अवरुद्ध भएको थियो । बाजेले रोक्न खोज्दा खोज्दै पनि उनको आँखाभित्र आँसु छचल्कीएको थियो । बाजेको कुरा सुन्दा प्रभालाई निकै नरमाइलो

लाग्यो । गाईबाजेको व्यथित आवाजले प्रभालाई पगाल्यो । थाहै नपाई प्रभाको मुखबाट फुस्कीहाल्यो “म तिम्रो आफन्त होईन र ?”

प्रभाको कुरा सुनेपछि बाजको अनुहारमा केही चमक देखियो । उनले निकै माया गरेर प्रभाको टाउको मुसारे । प्रभाले गाईबाजेको हात समातेर हिडन छोडेको बर्षौं भएको थियो । त्यसदिन भने उसले बाजेको हात समातेरै स्कूल गई प्रभा दश कक्षामा पुगेपछि भने गाईबाजेसँग स्कूल जाने काम टुट्यो । कहिले टयूशन अनि कहिले कोचीङ्ग पढ्न दौडीरहनु पर्ने भएपछि गाईबाजेसँग भेट पनि त्यति हुन्थेन । गाईबाजेलाई प्रभा व्यस्त हुनुपर्ने कारण थाहा थियो तैपनि उनको बानी छुटेको थिएन । प्रभाको घर अगाडि पुगेपछि ’प्रभानानी’ भनेर बोलाउन गाईबाजेले कहिल्यै विर्सन्थेनन् ।

प्रभाले एस.एल.सी. पास गरी । अब ऊ निलो फ्रक र सेतो सर्ट लगाएर स्कूल जाने ’केटी’ रहिन । प्रभाको कलेज यात्रा सुरु भयो । कहिलेकाही गाईबाजेसंग भने उसको भेट भैरहन्थ्यो । प्रभाले गाईगोरुको हिसाब बुझ्दीनथी अनि गाईबाजेले प्रभाको किताबको अर्थ बुझ्दैनथे तैपनि भेट हुँदा दुःख सुखका कुरा हुन्थे । गाईबाजेले प्रभालाई पुरानो कुरा सुनाइरहन्थे– – प्रभा काँधमा बसेको कुरा, गाईबाजेसँग पछि लागेर जंगल गएको कुरा, बाच्छीको पुच्छर तान्दा प्रभाले लडेको कुरा, यस्तै यस्तै धेरै कुरा । अनि गाईबाजेले लामो सुस्केरा छोड्दै भन्थे “प्रभानानी अब त तँ पनि ठूली भैसकिस पहिले जस्तो कहाँ रह्यो र ?“

साँच्चै नै सबैथोक बदलिई सकेको थियो । प्रभा यौवनको उच्चतम मार्गमा यात्रा गर्दैथिई । ऊ आफ्ना दौतरीहरुसंग बढी रमाइलो गर्न सिकेकी थिई । नजानीदो किसिमले प्रभाले गाईबाजेलाई भुल्दै गएकी थिई । गाईबाजेसँग उसको भेटघाट पातलिई सकेको थियो । गाईबाजे बुढेसकालको यात्रामा

तल्लीन थिए । बुढ्यौलीले गर्दा उनी पहिले झै फूर्तिसाथ हिड्दैनथे । प्रभाले चिन्ने साना बाच्छाबाच्छीहरु पनि बुढा भैसकेका थिए ।

" प्रभानानी, सन्चै छस् ?" धेरैपछि एकदिन बाटोमा प्रभासँग भेट हुँदा गाईबाजेले सोधे । प्रभाले पनि सन्चो बिसन्चो सोधी ।

"गाई गोरु त धेरै कम भएछन ।" कुरै कुरामा प्रभाले भनि । "अचेल सवैजना धनि भए, गाई गोरु पाल्नै छोडे । मालिकले यौटा गाई दिएका थिए, अहिले त्यही गाईका सन्तानहरु मात्र छन् । यिनै गाई गोरुसंग खेल्छु । दिन बिताउँछु ।" गाइबाजेले जवर्जस्ती हाँस्दै भने । गाईबाजेको हाँसो भित्रको व्यथा प्रभाको नजरदेखि लुक्न सकेन ।

"अब त बुढोपनि भयौं, सधैभरि गाईगोरुको पछि कति दौडिन्छौं ?" प्रभाले सल्लाह दिई "यि सबै गाई गोरु बेचेर बसेपनि त हुन्छ नी ।" गाईबाजे केही मलिन देखिए ।

" यि गाई गोरु त मेरा सन्तान छोरी छोरी हुन नि । आफ्ना सन्तान बेचेर म कसरी बाँच्ने ?" गाई बाजेले शुष्क स्वरमा भने । प्रभा केही बोलीन । उसलाई व्यर्थै गाई गोरु बेच्ने कुरा गरिछु जस्तो लाग्यो ।

"बाँचुन्जेल यिनीहरुसँगै हिड्छु । म मरें भने यिनीहरुले दुःख पाउने त होलान नि ?" गाई बाजेले फेरी भने । उनको कुरा सुन्दा प्रभालाई नरमाइलो लाग्यो ।

एकदिन गाईबाजे आउँदा प्रभाको आमा उनैलाई कुरेर बाटोमा उभिएकी थिइन ।

"प्रभा नानी कता छे अचेल ?" सधैझैं गाईबाजेले सोधे ।

"हिजो प्रभाको बिहेको कुरा छिन्यौँ । सोमवार विहे हो । विहेको जग्गेमा हरियो पातका टपरी चाहिन्छ । म जंगल जान भ्याउन्न, अलिकता सालको पात टिपेर ल्याइदेउ न है । "प्रभाको आमाले भनिन ।

"ए ! प्रभा नानीको विहे हुने भो ?" गाईबाजेको अनुहारमा एक्कासी अनौठो भाव झल्कियो ।

"हिजै जस्तो लाग्छ मेरो हात समातेर हिडेको ।" गाईबाजेले सुस्तरी भने ।

"बाजे पनि बुढो भयो नि ।" प्रभाको आमाले हाँस्दै भनिन् । आफ्नो अतीत र वर्तमान संझेर बाजेपनि मुसुक्क हाँसे । साँझपख घर फर्किदा बाजेको लठ्ठीमा सानो पोको होइन पातको भारी नै झुण्डिएको थियो । त्यसदिन उनले प्रभाको घरै गएर प्रभालाई भेटे । गाईबाजे मेरो विहेमा जसरी पनि आउ है ।" प्रभाले आफ्नो विहेको निम्तो दिँदै भनि ।

गाईबाजे केही बोलेनन् । उनले एकपटक आफैलाई हेरे– मैलो शरीर, थोत्रे पहिरन, जीर्ण शरीर ।' यस्तो मान्छे पनि विहेमा आउन मिल्छ र भनेर उनले आफैलाई मनमनै प्रश्न गरे ।

" बाजे आउ है । तिमी आएनौ भने म कहिल्यै पनि तिमीसँग बोल्दिन ।" प्रभाले घुर्कि देखाई ।

बाजेको आँखा वरिपरि फेरि पुराना दृश्यहरु पनि घुमे । सानी छँदा प्रभा धेरै पटक गाईबाजेसँग रिसाएकी थिई । रिसाउँदा उ गाईबाजेसँग पटक्कै बोल्दिनथी । गाईबाजे सँगसँगै हिडेपनि उसको मुखबाट बोली निस्कदैनथ्यो । आखिरमा बाध्य भएर गाईबाजेले नै प्रभालाई फकाउनु पर्‍यो ।

गाईबाजेले उहि पुराना घटना. सँझीए । प्रभाको टाउकोमा हात राख्दै गाईबाजेले सुस्तरी भने "तँ अझैपनि उस्तै छेस प्रभा नानी ।"

विहेमा आउने बचन दिएर गाईबाजे गए ।

प्रभाको घरमा जोडतोडसँग विहेको तयारी चल्न थाल्यो । विहेमा चाहिने टपरी दुना बनाउन बाजेले दुई दिनसम्म पात ल्याईदिए ।

तेस्रो दिन गाईबाजे देखिएनन् ।

विसौ वर्षदेखि 'समय सूचक बन्दै आएका गाईबाजेलाई र उनका गाईलाई नदेख्दा सबैजनाले अचम्म माने ।'

"आजसम्म गाईबाजे नआएको कुनै दिन नै थिएन । कतै गाईबाजे मर्न त मरेनन् ?" सबैले यस्तै शंका गरे । प्रभाको घरमा पनि गाईबाजेको बारेमा चर्चा चल्यो ।

प्रभाको मनमा अज्ञात भय उब्जियो । उसले मनमनै प्रार्थना गरी" गाईबाजेलाई केही नहोस ।" भोलिपल्ट पनि गाईबाजे र उनका गाईृ 'देखिएनन् । प्रभालाई निकै नरमाइलो लाग्यो । गाईबाजेको बारेमा केही थाहा पाइन्छ कि भनेर दिउँसोपख ऊ सुटुक्क चोकसम्म पुगी ।

"मैले बसबाट देखेको, गाईबाजे हिड्दै कतै जाँदैथिए । " कसैले खबर ल्याई पु¥यायो । खबर प्रभाले पनि सुनि । गाईबाजे सकुशलै भएको खबर थाहा पाएर ऊ खुसी भई । यौटा प्रश्न भने उसको मनमा उब्ज्यो " गाईबाजे कता गए होलान ?"

विवाहको दिन–

प्रभाको घरमा मानिसहरुको चहलपहल निकै थियो । झिलीमिली टेन्ट र रंगीन बत्तीहरुले प्रभाको घर दुलही झैं वनेको थियो । दुलही बनेकी प्रभा आफ्नो कोठामा सिंगारिएर बसेकी थिई । उसले झ्यालबाट बारम्बार हेरिरहन्थी–को आयो ? को आएन भनेर ।

जन्ती आईपुगेका थिएनन् । बाहिर निम्तालुहरुको भीड थियो । कोठामा प्रभा र उसका केही साथीहरु थिए । त्यही बेलामा बाहिरबाट कसैले ढोका ढकढकायो । प्रभाकी साथीले ढोका खोली, “हेर त प्रभा को आएको छ ?” ढोकामा उभिएकी प्रभाको आमाले भनिन् ।

प्रभाले देखि – उसकै गाईबाजे उभिएका थिए । उस्तै लुगी उस्तै टिसर्ट, टाउकोमा फेटा, हातमा लठ्ठी अनि लठ्ठीमा सानो पोको ।

“बाजे भित्रै आउन ।” प्रभाले आग्रह गरी । भित्र जान संकोच मानेर गाईबाजे ढोकामा उभिइरहे ।

प्रभाले आफै उठेर गाईबाजेलाई डो¥याएर कोठामा ल्याई । गाईबाजेलाई देखेर प्रभाका साथीहरु हाँसे । प्रभाले संकेत गरेर चुपलाग्न लगाई ।

छि कस्तो गोवर गोवर गन्हायो ! भन्दै– प्रभाका सबै साथी बाहिर निस्के । कोठामा प्रभा र गाईबाजे मात्र बाँकी रहे ।

“बाजे सोफामा बस न ।“ प्रभाले भनि तर बाजे भुईमा कार्पेटमा बसे । प्रभापनि संगै बसी ।

“हिजो अस्ती कहाँ गएका थियौ र ?” प्रभाले सोधी । बाजेले कुनै जबाफ दिएनन् ।

गाईबाजेले लठ्ठीको टुप्पामा बाँधीएको पोको फुकाए । प्रभाले देखि त्यहां दुईवटा सुनका बाला थिए ।

“अब त टाढा हुनेभइस् । मैले नदेखेपनि यिनीहरुले त तँलाई देख्लान नी । यो मेरो चिनोलाई आफूसँगै राख है ।” गाईबाजेले सुनका बाला प्रभाको हातमा राखिर्दिंदै भने ।

“बाजे, यो बाला... ?” प्रभा अचम्म परी–बाजेले सुनको बाला कहाँबाट ल्याए भनेर । तैपनि उसले सोध्ने हिम्मत गरिन ।

“मैले गाई बेचिदिएँ ।” बाजेको स्वर ओसीलो बन्दै थियो । गाईबाजेले आफ्नो सन्तान जस्तै ठान्ने गाई गोरु बेचेको कुरा सुन्दा उसलाई विश्वास नै लागेन ।

“म अब बुढो भएँ, धेरै हिड्न सक्दीन । कुनदिन मर्छु थाहा छैन, त्यसैले मैले गाई गोरु सबै बेचिदिएँ । ” बाजेले रोकिई रोकिई प्रभालाई सुनाए । बाजेले जे भनेपनि प्रभालाई सुनको बाला किनिदिनको लागि बाजेले आफ्ना सन्तानजस्तै गरेर पालेका गाईगोरु बेचेका थिए । यो कुरा अनुमान गर्न प्रभालाई गा¥हो भएन ।

“मलाई केही चाहिएकै थिएन । तिमीले गाई गोरु नबेचेको भएपनि त हुन्थ्यो नी ।” गाईबाजेको नजीकै उभिएर प्रभाले भनि ।

“अब त म एक्लै हुने भएँ प्रभा नानी ।” निकै व्यथित स्वर थियो गाईबाजेको ।

गाईबाजेको लागि उनका गाईगोरु कति महत्वपूर्ण थिए भन्ने कुरा प्रभालाई राम्ररी थाहा थियो । गाईबाजेलाई एक्लै हुन नदिनको लागि उनका गाई

गोरु किनेर फिर्ता ल्याउने योजना प्रभाले मनमनै बनाई । प्रभाले सोधी" सबै गाई गोरु कसले किन्यो त ?" गाईबाजे केही बोलेनन् ।

"भनन गाईबाजे " प्रभाले आग्रह गरी ।

" अचेल त्यस्ता गाई गोरु कसले पो किन्छ र ? इन्डीयातिरको मुसलमान कसाही रहेछ, उसैलाई बेचिदिए ।" गाईबाजेले बल्लतल्ल बाक्य पूरा गरे । प्रभालाई मुटुमा तातो भिरले छेंडे जस्तो महसुस भयो । आफ्ना बाल्यकालका साथी बनेका अनि गाईबाजेका सन्तान जस्ता गाईगोरु कसाहीको हातमा पुगेको कुरा सुन्दा प्रभा स्तब्ध भई ।

'बाजे.. 'प्रभाले बाक्य पूरा गर्न सकिन । उसले गाईबाजेको हात समाती । गाईबाजे उ तर्फ फर्किए । गाईबाजेका आँखाबाट आँसका भेल बगीरहेका थिए । रोक्न खोज्दा खोज्दै पनि उनी सुक्क सुक्क गर्दै रोइरहेका थिए । त्यो कारुणीक क्षणमा प्रभाले पनि आफूलाई सम्हाल्न सकिन । उसका आँखा पनि रसाउँदै गएँ । आँसु भरिएका आँखाले उसले हातको सुनको बाल हेरिरही अनि आफ्ना बाल्यकाल सम्झीरही । कुनबेला गाईंबाजे बाहिर निस्के, प्रभाले थाहै पाईन ।

# ५

# समय र दौड

मेरो घडिले एघार बजेको संकेत दिइसकेको थियो । साढे दशमा नै म त्यहाँ पुगेर बसिसकेको थिएँ ।

हिजो सावित्रीले बोलाएकी थिई– बाह्रबजे प्रतिक्षालयमा भेटनु भनेर । उसले यसरी बोलाउँछे भनेर मलाई विश्वास नै थिएन । बोलाएर ऊ हात हल्लाउदै गई, म बाटोमा उभिएर उस्लाई हेरीरहें । पछि मोटरले हर्न लगाउँदा पो बल्ल मलाई थाहा भयो – बीच बाटोमा उभिएको रहेछु भनेर ।

त्यसपछि घर आएँ । म साहै्र खुशी भएको थिएँ । मेरो मन खुशीले सगरमाथा भन्दा पनि अग्लो भएको थियो । शरिरका प्रत्येक नशानशामा मायाका तरंगहरूले काउकुति लगाउँदै लुकामारी खेलीरहेका थिए । खुशीहुदै गएर आफ्नो पलङ्गा पल्टे । खुशीको उन्मादमा कति जोडले पल्टेछु कुन्नि– पलडको खुट्टा नै भाँचीयो । पछि खुट्टालाई ठोकठाक गरेर जोड़ें । अनि सिरानीलाई अंगालोमा कसेर पल्टीरहें । त्यसबेला मुसुक्क हाँस्दै सावित्री आई मेरो अंगालोमा । मैले सावित्रीलाई अंगालोमा कसेर चुमे । सावित्री लजाई, म मुस्काएँ । कोठाका प्रत्येक वस्तु मुस्कुराए । मेरो मन, प्राण मसंग थिएन । मन बादलसरी माथिमाथि उडिरहेको थियो । मैले सावित्रीलाई अंगालोमा कसेको थिएँ । सावीत्रीले मेरो ओठ, गालामा सबैतिर

चुम्बन गरिरहेकी थिई । त्यत्तीकैमा बाहीर साईकलको घण्टी बज्यो । म झस्कें । यसो हेरें–अंगालोमा सावीत्री थिइन । मेरो अंगालोमा त घरकै कुकुर टोमी थियो । टोमीले मलाई चाटीरहेको थियो । मैले त्यसलाई पिटेर बाहीर पठाएँ । त्यतिबेला सम्म साँझ परिसकेको थियो ।

बिहान उठन अबेर हुन्छ भनेर घडीमा अलार्म लगाएँ –चाडो उठ्न भनेर । रातभरी निन्द्रा लागेन । सावित्रीसँग भेट भएर के भन्ने ? के गर्ने भन्ने योजना बनाउदा बनाउदै सारा रात बित्यो ।

बिहान सबैभन्दा चाडो उठें । सधै नुहाउने साबुनको साटो दिदिले नुहाउने वास्नादार शैम्पू' ले नुहाएँ । कपालमा बसाउने तेल लगाएँ । नौ बजेसम्म लगाउने कपडा छान्दा छान्दै बित्यो । त्ययसपछि खाना खाएर कपडा लगाएर शोभाखरको घरमा गएर उसको कालो चश्मा र जुता पनि मागेर लगाएँ । उसँग भएको अत्तर पनि कपडामा दलें अनि साईकलमा चढेर निस्के । मणिग्राम गएर सैलुनको विशाल ऐनामा उभिएर हेरें – त्यसबेला म फिल्मको हिरो शाहरुख खान भन्दापनि राम्रो देखीएको थिएँ । त्यसपछि बुटवल आएँ । कपडामा मैलो लाग्छ भनेर रिक्सामा चढेर सावीत्रीले बोलाएको बुटवल बहुमुखी क्याम्पसको प्रतिक्षालयमा पुगें ।

साढ़े एघार पनि बज्यो तर सावित्री आईन् । हुन त उसले मलाई बाह्र बजे बोलाएकी थिई । बाह्रबजे ऊ आउछँे अनि मेरो प्रशंशा गर्नेछ, हामी दुबै रिक्सामा चढेर फिल्म हेर्न जानेछौ, उसको काँधमा टाउको राखेर फिल्म हेर्नेछु, उसले मलाई चुम्नेछे अनि मैले उसको लामोलामो केश खेलाउदै विस्तारै भनौला' आई लव यु । अनि सावित्रीले लाजले आँखा झुकाउली । मैले प्रतिक्षालयमा बसेर यस्तै सोचिरहेको थिएँ । यताउति को आयो, को

गयो भन्ने मलाई हेक्का नै थिएन । घडीले बाह्रे बजाउन थालिसकेको थियो, तर सावित्रीको अत्तोपत्तो थिएन । मेरो बेचैनी बढिरहेको थियो । बाह्र बज्यो अनि सवा बाह्र पनि । मेरो मनमा चिसो पस्यो – सावित्रीले ढाँटेको त हैन ? सावित्री त्यस्ती केटि त हैन । आजसम्म यस्तो झुट बोलेको त मलाई थाहा नै थिएन । कतै आज 'अप्रैल फूल' त हैन ?

'भाई आज अप्रिल फुल त हैन?' बरफ बेच्न ल्याएको केटोलाई सोधें ।

' आच्या ! त्यति पनि थाहा छैन? आज त बैशाख १ गते हो ।" केटाले मलाई खिस्सी गर्ने पाराले भयो ।

हो त नि मैले कस्तरी बिर्सेको । अप्रिल फूल चैत्रमा पो पर्छ । सावीत्रीले ढाँटेकी छैन ।

'कतै मलाई राजमार्ग चौराहाको बस बिसौनीमा त बोलाएकी हैन ? मनमा शंका लाग्यो । म हतपत एउटा रिक्सामा चढें र रिक्सालाई सकेसम्म चाडो कुदाउन भने । ओरालो बाटो भएकोले उत्तिखेरै राजमार्ग चौराहा पुगें । तर त्यहाँपनि सावित्री थिइन । नारायणगढ जाने स्टेशनमा नदेखेपछि भैरहवा जाने बाटोतर्फ दगुरें ।. बाटोमा केराको बोक्रा रहेछ, त्यसमा चिप्लेर तीन हात पर उछिट्टिएँ । रोकिन खोज्दाखोज्दै बाटोमा हिडिरहेकी आईमईलाई अंगाल्न पुगेछु ।

' चोर गुण्डा, दिउसै आइमाई समात्ने ..." भन्दै उसले गाली गर्न थालि, रमिता होला भनेर माफ मागेर बस स्टेन्ड गएँ । त्यहाँपनि सावित्री थिइन । मन साह्रै आत्तियो– सावित्री किन आइन भनेर ।

उसले महेन्द्रपार्कको बिसौनिमा उभिएर भेट्ने निम्तो दिएको थिई । ऊ त्यहाँ त बसेकी छैन भन्ने शंका लाग्यो. फेरी रिक्शामा चढेर माथि महेन्द्रपपार्क तर लागें ।

मलाई साह्रै हतार भएको थियो, तर रिक्साको गति सुस्त थियो ।

" भाई अलिक हाँक न ।" मैले भने

"उकालो बाटो, सकेको हान्केकै छु. यो भन्दा छिटो कसरि हाँक्नु?" रिक्सावालाले भन्यो.

" तिमि बस, मा चलाउछु. यो भन्दा छिटो त मैले हाँक्छु ।" मैले भने

उसले नमान्दा नमान्दै पनि उसलाई रिक्सामा बसालेर मैले रिक्सा चलाउन थालें । मिलनचोक सम्म त बल्लतल्ल चलाएँ, त्यसभन्दा माथि चलाउने सकिन । त्यहाँसम्मको भाडा दिएर रिक्साबाट ओर्लेर दगुर्न थालें ।

"को आएको छ र भाई यसरि दगुरेको?" ज्ञवाली पथ पुग्दा कसैले सोध्यो.

" तिम्रा बा आएका छन् " मैले रिसाउदै भनें ।

" मेरा बा मरेको १० वर्ष भयो, कसरि आएछन त ?" उसले भन्यो । वरपरको मान्छे गलल्ल हाँसेको सुनियो ।

म नरोकिकन दगुरिरहें ।

सडक विभागको अगाडी पुग्दा म गोबरमा चिप्लेर सडकमै लडें ।

त्यतिबेला एउटा सानो केटो आएर भन्यो ’दाजुलाई  गोबरमा स्केटीङ खेल्ने सोख रहेछ । रामननगरमा जानुहोस त जतिपनि खेल्न पाईन्छ त्यसपछि त तपाई च्याम्पिएन ।’

मलाई साई रिस उठ्यो –ढुंगा टिपेर हिर्काएँ तर उसलाई लागेन । पारीबाट एउटा मान्छेले भन्दै थियो– हेर्दा त राम्रै देखीन्छ –पगला पो हो कि?’

त्यहाँबाट म सुस्त सुस्त हिड्दै गएर कुलोमा गोवर पखालें । गोजीबाट रुमाल झिकेर जुत्ता पुछपाछ गरें । सर्ट बाहीर निकालेर पछाडी भिजेको ढाकँे अनि  अस्पताल अगाडीको बस स्टेण्डमा पुगें । तर, त्यहाँ पनि सावित्री भिईन । म साह्रै थाकीसकेको थिएँ । हिड्ने जाँगर थिएन । अब कता जाने भन्ने थाहै थिएन । त्यहीबेला नगरबस आएर छेवैमा रोकियो ।

“जाने हो ?” कन्डेक्टरले सोध्यो । म चुपचाप बसमा चढें । केहीबेरमै बस क्याम्पसको वस स्टेण्डमा पुगेर रोकियो । भाडा तिरेर म त्यही झरें । एक बजन पाँच मिनेट बाँकि थियो । मलाई साबित्रीसंग साह्रै रिस उठेको थियो । सावित्रीले मलाई ठूलो धोका दिएकी थिई । मलाई सावित्रीदेखी घृणा जागेको थियो । म अब साबित्री त के , कुनैपनि केटीलाई प्रेम गर्दिन भन्ने प्रतिज्ञा गरें ।

यस्तै कुरा सोच्दै बसिरहेको थिए –त्यहीबेला हातमा सानो ब्याग हल्लाउँदै मुसुक्क हाँस्दै सावित्री आईपुगी ।

“कतिबेला आयौ ?” नजीकै आएर सोधी ।

मलाई बाह्र बजे बोलाएर आफू यति बेला आउने हो ? मैले कति दुःख पाएँ थाहा छ? ' मैले रिसाउँदै भनें ।

"भनेकै समयमा त आएकी छु नि ? ढिला भएको त छैन नि ।" उसले घडि हेर्दै भनि ।

"म आएको पनि एकघण्टा भयो । घडिमा कति बज्यो अहिले थाहा छ?' मैले घडी हेरें–ठिक एक बजेको थियो । मेरो बाँकि कुरा पूरा नहुँदै बि. टि आईको घण्टीले बाह्र बजेको घण्टी बजायो ।

आफ्नो हातको घडी हेर्दै म छक्क परें ।

"आफैले घडि छिटो बनायो होला मलाई गाली गर्न पाउछु भनेर ।" सावित्रीले हास्दै भनि ।

मैले झल्यास्स सम्झें । आज बिहान छिटो उठ्न भनेर हिजो राती घडि एक घण्टा छिटो बनाएको थिएँ । त्यसैले मेरो घडीको समय अगाडी चलिरहेको थियो । अहिले सरासरले बाह्र बजेको थियो । मैले एकघण्टा पहिल्यै नै बाह्र बजेको ठान्दा पाएको दुःख साबित्रीलाई सुनाउन पनि सकिन । एक घण्टामा पाएको दुख सम्झेर मैले टाउको समातँे ।

बुटवल, रुपन्देही

# ६

# नजन्मिएकी छोरी

मलाई त्यसबेला पटक्कै लागेको थिएन– हाम्रो संवादहीनता ६ महिनासम्म लम्बिनेछ भनेर । ६ महिनापूर्वको अप्रिय घट्नाले मलाई अहिलेसम्म सताइरहेको छ । आँखामा उदासी र मनमा छटपटी छ । म छु तर मसँग आफ्नै जीवन छैन जस्तो लाग्छ । कहिलेकाँही सोच्छु त्यति सानो कुराले यत्रो आकार कसरी लिन सक्यो ?

बिहेको पहिलो वर्ष थियो ललिता र मेरो वैवाहिक जीवन निकै उल्लासपूर्ण बितिरहेको थियो हामी दुईबीच राम्रो समझदारी थियो । बिहान म अफिस जाने बेला मुसुक्क हाँसेर विदाइ गर्थी अनि घर फर्कदा आँगनमा उभिएर मलाई नै स्वागत गरिरहेकी हुन्थी । मेरो खानपिन, लुगाफाटो सधै समयमै तयार गरिदिन्थी । कहिले काँही मैले कलेजमा पढाउनुपर्ने विषयवस्तुको टिपोटसमेत गरिदिन्थी ।

बिहेपहिले एकपटक देखेको नभएपनि बिहेपछि उसलाई निकै कम समयमै धेरै माया गर्न थालेको थिएँ । उसले पनि साह्रै माया गर्थी । ललिता १–२ दिन माईत गएर बसी भने मेरो मनमा निकै छटपटी हुन्थ्यो । केही न केही निहुँ पारेर उसलाई भेट्न पुगिहाल्थेँ ।

'ललिता, मलाई छोडेर टाढा न जाऊ है।' मैले बारम्बार भन्थे

'तपाईलाई छोडेर अन्त म कसरी बाँच्न सक्छु र ?' उसले निकै मायाल पाराले भन्थी ।

समय त्यसरी नै बितिरहेको थियो ।

छुट्टीको दिन थियो । ललिता र म कोठामा बसेर टी. भी. हेरिरहेका थियौ । टी.भी. मा शायद कुनै सिनेमा चलिरहेको थियो । सिनेमाका नायकनायिका आफ्नो सानी छोरीसँग खेलिरहेको दृष्य हेरेर मैले ललितालाई जिस्काउँदै भने–" हाम्रो घरमा यस्तै छुनुमुने कहिले आउने होली ?" ललिताले चोर आँखाले एकपटक मतर्फ हेरि अनि लजाएर अर्कोतर्फ फर्किई ।

मैले पहिलेकै कुरा दोहो¥याउँदै उसलाई काउकुती लगाइदिएँ ।

'फन्टुस् !' ललिता रिसाएर भै गरी 'किन चाहियो नि अहिले नै छुनमुने हजुरलाई ?

लाटी, त्यति पनि थाहा छैन । 'म पूरै जिस्किने मूडमा थिएँ । उसको गालामा प्याट्ट हिकाउँदै भने 'छुनुमुने भयो भने काखमा राखेर म्वाई खान पाइन्छ । उसलाई काँधमा राखेर घुमाउन पाइन्छ । ऊसँग खेल्न पाइन्छ । छुनुमुने भई भने बिहान अफिस "जाँदा 'बाबा टाटा" भन्छे अनि घर फर्कदा "बाबा आउनुभयो भन्छे । बुझ्यौ ?"

"अँ ....खुब बाबा भन्ली ? "उसले लाजको पर्दा केही उघारी ।

"मलाई बाबा नभने के आमा भन्ली त ?" मैले हाँस्दै सोधे ।

"अठारौ शताब्दीमा भै केको बाबा नि ? हाम्रो बच्चीले त ड्याडी भनेर बोलाउने छे ।" ललिताले भनि ?

"ड्याडी स्याडी होइन, मलाई बाबा नै भनेको मन पर्छ, उसले पनि बाबा नै भन्नेछ, बुझ्यौ ?" किन हो कुन्नी यो कुरा मैले केही ठूलै स्वरमा भने ।

"दिदी दाइहरूका छोराछोरीले ड्याडी, मम्मी भन्छन् । हाम्रा छोराछोरीले बाबा, आमा भन्नुपर्दा 'अरूले 'पाखे' भन्दैनन् कि क्या हो ? मैले त जन्मने बित्तिकै ड्याडी, मम्मी भन्न सिकाउने हो ।" – ललिताले बिना कुनै संकोच भनी ।

"मैले कुनै हालतमा पनि ड्याडी मम्मी भन्न दिन्नँ ।" मेमा थाहै नपाई झगडा गर्ने उत्तेजना चढ्यो । "आफ्नो भाषा बोल्दा पाखे भइने, अर्काको नक्कल गरेर बोल्दा सभ्य भइने ? तिम्रो जस्तै दास सोचाइले गर्दा त समाज बिग्रेको हो । मलाई मेरो भाषा संस्कार प्यारो छ । हाम्रा सन्तानले पनि मैले सिकेको संस्कार अनुसार चल्नुपर्छ ।"

"चलेनन् भने नि ?" उसले शंका व्यक्त गरी ।

"कसरी चल्दैनन् ? दुई झापड दिएपछि उनीहरूले नमानेर सुख पाउँछन् ?" मैले भने ।

"खुब बल छ नि पाखुरामा । गतिलो कुरा सिकाउँछु भन्नु त परै जाओस् राम्रो कुरा सिके भनेर बच्चालाई पिट्ने कुरा गर्ने ?" ललिता मसँग निकै रिसाई ।

“बलको कुरा होईन , यो घरमा बस्नेले घरको संस्कार मान्नैपर्छ । कुसंस्कार बोकेर कोही पनि यहाँ बस्न पाइन्न । झापड लगाउने मात्र होइन गलहत्याउन पनि सकिन्छ । छोरी होस् कि मोरी !” म पनि रिसाएँ ।

“गलहत्याउने धम्की किन दिन पर्यो । यौटी छोरीलाई त माईत राखेर पनि पाल्न सक्छु ।” उसले घुर्की देखाई ।

माईतीमा राखेर छोरी पाल्ने कुरा गर्दा मलाई निकै रिस उठ्यो । मैले ठूलै स्वरमा भने, “माइतीको धम्की दिनु पर्दैन । तिम्रा माइतीलाई पनि मैले राम्ररी जानेको छु ।”

कुरा यहीबाट शुरू भयो । छोरीको कुराले मेरो घरपरिवार र ललिताको माइती पक्षसमेत झगडामा तानिए । रिसको झोंकमा ललिताले घर छोडेर जाने कुरा गरी । मैले पनि “ढोका खुल्ला छ, जहाँ मन लाग्छ त्यहाँ जान सक्छेस् भनिदिएँ ।”

साँझसम्म ललिता र मबीचको दूरी निकै बढिसकेको थियो । साँझ खाना त पाक्यो तर खान भने दुवैले खाएनौ । आमा वाले हामी दुवैलाई गाली गर्नुभयो । हामीहरू बोलेनौ । राति छुट्टाछुट्टै सुत्यौ ।

बिहान ललिताले सधैं चिया ल्याउँथी तर भोलिपल्ट ल्याइन । हिजोको रिस मरेको रहेनछ, दिउँसोसम्म त नर्मल भैहाल्छे भनेर चिया नपिएरै क्याम्पस गएँ । दिउँसो घर आउँदा ललिता थिइन । आमालाई सोधेर थाहा पाएँ ऊ त माइत गइछे ।

सामान्य विषयमा परेको झगडाले गदां एक वचन पनि नभनी घर छोडेर गएकोले ललितासँग निकै रिस उठ्यो । आमाले ललितालाई फकाएर ल्या भन्नुभयो तर मैले रिस मरेपछि १–२ दिनमा आउँछे भनेर चुप लागेर बसें ।

ललिताले घर छोडेर गएपछि जीवनयात्रा निकै अस्तव्यस्त भयो । भोक, निद्रा, हाँसो खुशी एकैपटक हरायो । मनमा एकाग्रता नहुँदा पढाउनुपर्ने विषयवस्तुको तयारी गर्न सकिनँ । अध्यापन राम्रो हुन नसक्दा धन्न धन्न कलेजको जागिर चट् भएन । येनकेन जागिर भने जोगाएँ ।

१–२ दिनमा ललिता आउली भन्ने ठानेको थिएँ तर ऊ फर्किन । ललिताले फोनसम्म गरिन र मैले पनि गरिनँ । दिनहरू बित्दै गए । उसको अनुपस्थितिमा येनकेन जीवन चलिरह्यो । हरपल उसैको सम्झना आइरहन्थ्यो । ऊबिना बाँच्न कठिन भैरहेको थियो तर पनि उसले आफै घर छोडेर गएकोले उसलाई भेट्न र फोन गर्न भने मेरो अहमले दिएन । मेरो घर पक्षले उसलाई लिएर आउन भनिरहन्थे र उसको माइतबाट पनि मान्छेहरूले त्यस्तै खबर पठाउँथे । ऊ आफै किन आइन त्यो त थाहा भएन तर म भने जसले घर छोडेर गएको हो ऊ आफै फर्कनुपर्छ भन्ने अड्डी राखेर उसलाई लिन गइनँ । ऊ टाढा गएर बसे पनि मेरो मनमा उसको तस्वीर यथावत थियो, उसको माया पनि उत्तिनै थियो । साथीहरूले “झगडा गरेर माईत गएर बस्नेलाई पर्खेर बस्नु हुँदैन’ भनेर उचाल्न खोजे पनि मैले ऊबाहेक अरूलाई मनमा आउन दिइनँ ।

६ महिना मन बाँधेर राखेपनि अन्ततः मन कमजोर भएरै छोड्यो । एक साँझ उसलाई फोन गरें । मैले “हेलो” भन्ने वित्तिकै उसले मेरो आवाज चिनिहाली ।

“मेरो माया लागेन ?” मैले केही बोल्न नभ्याउँदै उसले भनी ।

“तिमी पनि त निष्ठुरी बन्यौ नि ।” मैले भनें । केहीबेरसम्म दुवैजना बोल्न सकेनौं । गला त्यसै अवरूद्ध भयो ।

“तिमीले भने झैं छोरीले ड्याडी भने पनि मलाई नराम्रो लाग्ने छैन ।” मैले मौनता भंग गर्न भने ।

“म गलत रहिछु । ड्याडी भन्नुभन्दा त ’’बाबा’ भनेकै राम्रो सुनिदो रैछ ।” ललिताले ओसिलो स्वरमा भनी ।

“छोरीलाई नै सोधौला, उसले के भन्छे ?” मैले मध्यमार्ग अपनाएँ । ललिता सुस्तरी हाँसी ।

“छुनुमुने छोरी खेल्ने घर लथालिङ्ग छ, सम्हाल्न आऊ न है ।” मैले अनुरोध गरे ।

’फन्टुस् ।’ ललिताले मायालु पारामा भनी “मन पनि त लथालिङ्ग भएका छन् नि ।”

# ७

# यमकलीको दशैं

यमकली उमेरले ११ वर्ष नाघे पनि उमेर अनुसार सप्रिन नसकेकोले टाक्सीएर ७÷८ बर्षकी जस्ती देखिन्थि । आमा लाटी, बा बुढेसकाल लागेका । दुवै जना काम गर्न अल्छी र काम गर्न राम्ररी नदोहोर्ने भएकोले खान पुग्ने जग्गा भएपनि गरिबीले कहिल्यै छोडेन ।

उसको घरमा समयमा खाना कहिल्यै पाकेन । भात पाके पनि तरकारी विरलै पाक्थ्यो । पल्लो गाउँसम्म डुलेर मागेर ल्याएको महिले तरकारी र दाल दुबैको काम गर्थ्यो । मैले जानेसम्म उसको घरमा कहिल्यै चाड आएन । हरेक चाडबाडमा ऊ आपनी लाटी आमासंग मायाघर जान्थी र चाडको मजा उतै लिन्थी । उनिहरु मामाघर गएपछि घरमा चुलो बल्न छोड्थ्यो । यमकलीका बा वल्लोपल्लो घर डुल्थे र छिमेकीले दिएको खाएर छाक टार्थे । कसैले नदिए २–४ दिनसम्म भोकै पनि बस्थे। भोकै बस्नु उनको बाध्यता थिएन, मात्र पकाएर खान अल्छी गरेको उपज हुन्थ्यो त्यो ।

यमकली ठूली हुँदै गई । मान्छेको व्यंग्य बुझ्न थाली । हरेक चाडमा मामाघर गैरहदा मामाका छोराछोरीले होच्याएर बोल्दा हुन् ,त्यसैले यसपालीको दशैंमा ऊ मामाघर गईन । आमा भने घटस्थापनाको दिन हिडीसकेकी थिई।

हामीहरू घर सिगार्न लाग्यौं । यमकली हरेक दिन विहानदेखी बेलुकासम्म हाम्रो घर आएर बस्थी । घर लिपेको, रंग लगाएको, फूलवारी सफा गरेको

टोलाएर हेरीरहन्थी अनी आफ्नो घर गएर घरलाई हेरी रहन्थी । उसलाई पनि घर लिप्न, रंग लगाएर सिंगार्न मन लाग्दो हो । तर कहाँ लिप्ने? घरमा भित्ताको नाममा एक छेउमा भत्कन लागेको काठको भित्ता थियो त्यो पनि आज भोली कहीले ढल्छ थाहा थिएन ।

कहिलेकाही यमकलीले माटो मुछेर भत्कन लागेको भित्तो लिप्न पुग्थी अनि अलिकता लिपेर त्यत्तिकै छोडेर हिड्थी – सायद संभव नदेखेर होला । अरुले घर रंगाएको देखेर रहर जागेर होला उस्ले पनि हाम्रो घरबाट अलिकता कमेरो लगेर त्यहि भत्कन लागेको भित्तामा लगाई । 'आहा कति राम्रो देखीयो' भनि मैले भनिदिदा यमकली निकै खुशी देखिएकी थिई ।

नवमीको बिहानदेखी घरमा रोटी. हाल्न शुरू भयो । सबैको घरमा सेल पकाएको देखेर उसलाई पनि पकाउन मन लागेछ र बालाई फकाउन थालि।

' परेको छैन पकाउन, नभएको तेल सक्न ' यमकलीका बाले भने । 'भोली पारी काँ दिन्छन जति खाए पनि, घराँ किन पकाउन परो ?'

यमकली रोई कराई तर आफ्नो ढिपी छोडिन् । अन्ततः बाध्य भएर उसका बाले सेल पकाउने अनुमती दिए।

'गीता' हाम्ले पाने रोटी पकाउने ।' यमकली उफ्रदै हाम्रो घर आएर बैनीलाई सुनाई ।

'मलाई पनि दे है यम्कली' हाम्री बहिनीले जीस्कीएर भनि ।

उसलाई सुन्ने फुर्सद कहाँ थियो र? ऊ त अर्को घर दगुरी सकेकी थिई खबर सुनाउन । सेल पकाउन हुन्छ भने तापनि घरमा तेल बाहेक अरु सामग्री थिएन । साँझपख सेल पकाउने पिठो माग्न हाम्रो घरमा आई। आमाले सेल पकाउदा बाँकी रहेको पिठो दिएर पठाउनु भयो ।

खानपिन गरेर घरका हाम्रो घरमा सबैजना सुते । म केहीबेरे पढेर बाहीर निस्कदा यमकलीका बाउछोरी गुनगुन गरिरहेका थिए।

'यमकली के गर्दैछेस् ?' मैले सोधें ।

'रोटी पकाउन थाल्याई छु ।' उसको बोलीमा जोश झल्कीएको थियो। 'म भोली खान आउछु है ।' भनेर सुत्न गएँ।

भोलीपल्ट सधै विहान हाम्रो घरमा आउने यमकली दशैंको टिका थाप्ने बेलासम्म पनि हाम्रो घरमा देखा परिन ।

'यम्कली खै राईलाबा ?' मैले उसको बा लाई सोधें ।

'हिजो छोटी पकाउँछु भनेर जिद्दी गरेर रोटी पकाएकी थिई । राम्ररी नपकाई काँचै रोटी खाईचे। त्यही भएर अहिले पखाला  लगेर सिकिस्त भएर सुत्याई छ ।' राइला बाले भने ।

म उसको घर गएँ । यमकली खाटमा ओच्छ्याएको मैलो ओच्छ्यानमा पल्टीएकी थिई । नजीकै चुलो थियो । चुलोको छेउमा एउटा कराही थियो– हिजो रोटी पकाएको संकेत गर्थ्यो त्यसले । त्यसको नजिकै एउटा थालमा रोटीका टुक्राहरू थिए । रोटीका टुक्राहरू कुनै डढेका थिए भने

कुनै टुक्रा काँचै देखीयो । यमकली र उसका बाले हिजो त्यस्तै रोटी हुनुपर्छ ।

'के भयो यमकली ?' मैले उसको नजीकै गएर सोधें ।

यमकलीले आँखा उघारेर मलाई हेरी । मैले उसको टाउको छामे – ज्वरो पनि आएको रहेछ । अनुहार भरी हिजो रोटी पकाउँदा तेल पड्किएर पोलेको दाग थिए । दुबै हातमा पनि पोलेका फोकाहरू थिए ।

'सन्चो भएन ?' मैले फेरी सोधें । यमकली सकीनसकी उठी । एकपटक थालमा बाँकी रहेको सेलरोटीका टुक्रालाई हेरी । 'हाम्ले पनि हिजो रोटी पकाएर खा'को।' यमकली बोली । 'थुप्रै खाको , आज पनि खाने हो ।'

त्यसबेला उसको अनुहारमा खुशी र गर्वका लहर दौडीएका थिए । आफू विरामी परे पनि शरिर पोले पनि उसलाई थोरैपनि दुःखको महसुस भएको थिएन । ऊ त निकै खुशी थिई – किनकी उसको घरमा पनि दशैमा सेल रोटी पाकेको थियो ।

तिलोत्तमा–८, रुपन्देही

# ८

# गोष्ठी

ऊ त्यहाँ बस्न लागेको धेरै भएको थिएन । चुनाव हुनुभन्दा केहि अघि मात्र ऊ गाउँ फर्किएको थियो । उसको विगत बारेका कमैलाई थाहा छ । एक दशक हराएपछि उ घर फर्किएको थियो । उसले आफुलाई चार्टर्ड एकाउन्टेंसी पढ्न मुम्बईमा गएको भनेर सुनाउछ तर मान्छेहरु दिल्लीतिर कुनै कम्पनीको मेनेजरको घरमा नोकर बसेको बेलामा चोरि गरेकोले जेल परेको थियो भनेर खासखुस गर्छन् ।

आएपछि उसले एउटा सस्था खोलेर बसेको छ । त्यहाँ खासै केही काम छैन । दिनमा एक दुईजना अल्लारे केटा आउँछन गफ गर्छन् । कोहि क्यारम खेल्छन, धेरैजसो केटाहरु फ्री वाईफाईको सदुपयोग गर्दै गेम खेल्न र सामाजिक संजाल चलाउन आउछन् ।

कहिलेकाहिँ नयाँ मान्छेहरु पनि आउछन र संस्थाको सदस्य बनेर जान्छन । कसैले शुल्क दिएर अनि कसैले उधारोमा सदस्यता लिन्छन् ।

राजनैतीक पार्टीका स्थानीय नेता पनि कहिलेकाही आउँछन् । पार्टीमा आफ्नो योगदान र पहुँचको कुरा निकै बढाईचढाई गरेर चर्को आवाजमा गफ गर्छ । ध्यान दिएर सुनिदिने केटाहरु भए उसले केटाहरुलाई मुफ्तमा गुटका खान समेत दिन्छ । नभए एक्लै गफ गर्छ, सुर्तीको धुलो उडाउँछ अनि जान्छ ।

कोही आउँछन पुस्तक पत्रीका लिन्छन, बसेर पढछन अनि कोही लिएर जान्छन । यसरी नै हरेक दिन बित्छ अर्थात उसले यसरी नै हरेक दिन बिताउँछ ।

ऊ संस्थाको प्रमुख थियो अर्थात कुलपती अध्यक्ष, प्रधान, हाकिम भने पनि वा कोषाध्यक्ष , कर्मचारी जो भनेपनि ऊ नै थियो ।

ऊ फर्केर आएपछि गाउँमा परिवर्तन ल्याउने सुत्र आफुसंग छ भन्दै केटाहरुलाई मोहित पारेपछि पोहोरको चुनावताका गाउँका केटाहरू मिलेर खोलेका थिए त्यो संस्था 'ग्रामिण युवा प्रतिष्ठान' । उसको अध्यक्षतामा समिती बनेको थियो । गाँउको भोट पाउने आशामा सबै उम्मेदवारले त्यस संस्थालाई चन्दा सहयोग दिए । नेताहरुले दिएको ४०÷५० हजार , स्थानीयले दिएको चन्दा, सदस्यता शुल्क गरेर सानोसानो कोष पनि तयार भयो. कसैले कुर्सि दिए , कसैले टेवल दि ए। अनि एउटा उसको आफ्नो घरको एउटा कोठामा त्यस संस्थाको कार्यालय, पुस्तकालय, खेलकुद कक्ष बन्यो ।

चुनाव भयो। एउटाले जित्यो अर्को हा¥यो । जित्नेले बधाई पाए । उसले विजेतालाई बोलाएर संस्थाको तर्फबाट भब्य बधाई कार्यक्रम ग¥यो । आफ्नो सहयोगले नेताले जित्न सकेको भन्न छुटाएन । नेताले उसको संस्थालाई सहयोग गर्ने वचन दिएर गए ।

सरकार बन्यो । मन्त्रीहरू उद्घाटनमै व्यस्त ।

कहीले मन्दीर त कहिले मस्जीद ।

कहिले सेमिनार त कहिले तालिम ।

कहीले विमोचन कहीले गोष्ठी त कहिले बैठक ।

नेताका आसेपासेका फेसबुक र उसका चाकडीबाजले चलाएको मिडियामा त यस्ता समाचार आउने नै भए, राष्ट्रका मुलधारका मिडियामा समेत यस्तै कार्यक्रमका समाचारले धेरै स्थान पाउने गरेका हुन्थे ।

गोष्ठीका समाचार अलि बढी नै आउथे । फलानो मन्त्रीले गोष्ठी उद्घाटन गर्नुभयो ।

–अस्ति खानेपानी गोष्ठी ।

–हिजो फोहरमैला गोष्ठी ।

–आज गरिवी निवारण गोष्ठी ।

बुहारी र सासुको झगडाको गोष्ठी । कहीले स्थीरताको गोष्ठी त कहिले अस्थीरताको गोष्ठी ।

सुन्दासुन्दा मान्छेहरू वाक्क थिए । आखिर यतिका गोष्ठी किन गरिन्छ भनेर उसको अफिसमा आएका मध्ये कसैले जिज्ञासा राख्यो । उसले जवाफ दिन सकेन ।

एकदिन मिटीङमा सदस्यहरूमा उसले यही कुरा राख्यो ।

"यो कुरा जान्नको लागि त सस्थाले गोष्ठी आयोजना गर्नुपर्यो अध्यक्षज्यू । त्यसैपनि संस्थाले देखिनेगरी अहिलेसम्म केहि गर्न सकेको छैन ।" कुनै सदस्यले प्रस्ताव राख्यो ।

निष्कर्ष त गोष्ठीमा निकाल्न सकिन्छ । यसको लागी गोष्ठी गर्नु पर्छ ।' अर्कोले थप्योे ।

सबैले सस्थाले एउटा गोष्ठी आयोजना गर्ने आवाज उठाए र बैठकमा निर्णय पनि गरियो ।

पालिकामा चिनेका अंकल अध्यक्ष थिए । त्यहाँ अलिकता बजेट मागियो । नेता बन्न पाईन्छ कि भनेर आश गरेका स्थानीय टोले ठेकेदारहरुसंग चन्दा मागियो । सुशासन सम्बन्धि राष्ट्रिय स्तरको गोष्ठी गर्ने र त्यो वृहत कार्यक्रममा तपाईलाई नै प्रमुख अतिथि बनाउने हो भनेपछि मन्त्रीले पनि ठाडो आदेश दिएर मन्त्रालयबाट रकम दिलाए ।

नजिकैको बजारमा प्रायजसो सुनसान रहने पार्टी प्यालेशलाई  सिंगारियो । गोष्ठीको दिन सबै आए । नेता, ठेकेदार र समाजका अगुवा भनाउदाको लागि मञ्चको अघिल्लो भागमा स्थान थियो भने सहभागीको रुपमा संस्थाका पदाधिकारीहरुका घर, मावल र ससुरालितर्फका मान्छेहरु जम्मा भएकाले हल खचाखच भरिएको थियो ।  गोष्ठी चल्यो, मन्त्री र अन्यले भाषण गरे । अध्यक्षको हैसियतले उसले आफुले विदेशमा सुशासनको नमूना देखेको र त्यसैको बारेमा अध्ययन समेत गरेर आएकोले अब नेपालमा सुसाशन ल्याउन उसको फर्मुला अनुसार चल्नुपर्ने कुरा बतायो । अरु विद्वानहरुले पनि आफ्नो विचार बिसाए । खाजानास्ता र भत्ता पाएपछि अधिकांश सहभागीहरु घर फर्किए । साँझपख विशेष आमन्त्रीत, मन्त्री र सस्थाका खास मान्छेको लागि विशेष खानपिन समारोह राखियो । ह्विस्की र बियरका बोतल खुले, मासुका थरिथरिका आइटमहरुले सहभागीका मुख भरिए । ९ बजेतिर गोष्ठी समापन भयो ।

भोज सकिनु अघि नै उसले २ कार्टुन बियर आफ्नो सालो मार्फत घर पठाईसकेको थियो । ऊ पार्टी प्यालेसको एकाउन्टेन्टलाई भेटेर हिसाब

मिलायो । दुई गुणा बढी खर्च देखिने बिल बनाउने सहमति पहिले नै भएकोले बिल बनाउन झन्झट भएन ।

दिनभरको धपेडीले उ थाकेको थियो । घर पुग्नासाथ उसले टेलिभिजन खोल्यो । स्थानीय च्यानलमा गोष्ठीको समाचार आइरहेको रहेछ । उसले ध्यान दिएर हे¥यो । समाचारमा मन्त्री र ऊ बोलेको देखायो । अर्को राष्ट्रिय च्यानलले पनि कार्यक्रमको सानो झलक देखायो । आफुलाई निकै ठुलो ठान्यो उसले ।

समाचार सकिएपछी मोबाईल खोल्यो । उसलाई टयाग गरिएका समाचारका लिंकहरु ह्यार्र आए । नछुटाई सबै पढ्यो, धन्यवाद दियो र समाचार तथा तस्विरहरु शेयर ग¥यो । यसो गर्दा मध्यरात भैसकेको थियो ।

बिहान अरुदिनमा भन्दा छिटो मार्निंग वाकमा निस्कियो र सकेसम्म धेरै टोल चाहा¥यो । २÷४ जना गाउँलेहरुले उसलाई टिभीमा देखेको, समाचारमा सुनेको कुरा सुनाउदा उसको भुईमा खुट्टा रहेन ।

दिउसो नै मिटिंग राखेको थियो त्यसैले घरमा गएर कार्यक्रमको आम्दानी र खर्चको हिसाब निकाल्यो । पहिले नै खाली बिलहरु ल्याएको थियो । सस्थालाई १०÷२० हजार जोगिएको देखिनेगरी बिल तयार ग¥यो । अघिल्लो रातिको पार्टीमा मिलाएको बिल र बाँकि बिल मिलानबाट उसको भागमा राम्रै रकम जम्मा भएको थियो ।

दिउसो सस्थाको मिटिंग बस्यो । गोष्ठीको लागि खटिएका साथीहरुको लागि राम्रै भत्ताको व्यवस्था गरेको कुरा सुनायो । बैठकमा उपस्थित भएकाहरु खुशी भए अनि सहजै आम्दानि खर्च अनुमोदन गरिदिए ।

अनि बैठकको अन्त्यमा सुशासन सम्बन्धि गोष्ठी निकै फलदायी भएकोले यस्ता कार्यक्रमहरु प्रदेशका अन्य स्थानमा पनि गर्नुपर्ने प्रस्ताव राख्यो । बैठकका सहभागीले तालीको गडगडाहटबाट उसको प्रस्ताव स्वीकृत गरे ।

# ९

# उपकार

लालेले  दश वर्षको उमेरमै बाउ गुमायो । उसको घरमा अशक्त विरामी आमा र दुइ जना साना भाइ बैनी मात्र बाँकी रहे । उसको बाउ मर्दा सम्पत्तिको नाममा यौटा झुपडी मात्र छोडेर गएका थिए । अन्य सम्पत्ति केही थिएन । १० वर्षको उमेरमै लानेको काँधमा पारिवारिक जिम्मेवारी आयो । लाले एक्कासी परिपक्क बन्यो ।

केही कमाउने आशामा माथिल्लाघरे दाइसंग लाले शहर गयो । दाइले उसलाई एउटा घरमा नोकरी लगाइ दिए । त्यस उसले एक वर्ष काम गयो । त्यहाँ उसले पैसा त कमाएन तर शहरको रहनसहन सिक्यो । उसले त्यहाँको नोकरी छोडेर होटलमा काम गर्न थाल्यो । होटलमा कष्टपूर्ण जागिर गर्दा उसले सांसारिक चालचलनको बारेमा धेरै कुरा सिक्यो । आफ्नो गरिबीको कारण पत्ता लगायो । सुख पाउनको लागि पढ्नु पर्दो रहेछ भन्ने कुरा सिक्यो । लालेले आफूले पढ्न नपाए पनि भाइ बहिनीलाई पढाएर ठूलो मान्छे बनाउने प्रण गयो र गाउँ गएर भाइ बहिनीलाई स्कूलमा भर्ना गरिदियो । अब लालेको काँधमा झन जिम्मेवारी थपियो । उसले विरामी आमालाई ओखतीमूलो गर्ने र भाइ बहिनीलाई राम्रो शिक्षा दिलाउन आवश्यक पर्ने रुपैयांको लागि अझ बढी मेहनत गर्न थाल्यो । पढ्न र

पेटभरी खान पाउंदा लालेका भाइ बैनी खुशी थिए अनि उपचार पाउंदा र छोराछोरी खुशी भएको देख्दा लालेकी आमा त्यसै खुशी थिइन ।

होटेलको जागिरबाट लाने खासै कमाइ नहुने ठहर गयो । उसले काम गर्ने होटलमा खाना खान आउने एक जना ड्राइभरसंग उसको हेलमेल बढेको थियो । त्यही हेलमेलको प्रभावले गर्दा लालेको त्यही ड्राइभरले चलाउने बसमा खलासीको नोकरी पायो । शहरमा छिरेको ५ वर्ष पछि लालेको बसको ढोका ठटाउदै सडकमा दगुर्ने गाडीमा हिड्न पायो । उसको यो जागिर पहिलेको भन्दा सजिलो थियो र आम्दानी पनि बढी नै हुन्थ्यो । ड्राइभरको ऊ माथि राम्रो कृपा थियो, उसले लालेलाई गाडी चलाउन सिकाइ दिन्छु भनेको थियो । लाले ड्राइभरसंगै बस्थ्यो खान्थ्यो र कमाएको रुपैया गाउँंमा पठाउथ्यो । उसले मनमनै योजना बनाइसकेको थियो–ड्राइभर भएपछि डेरा खोजेर आमा र भाइ बैनीलाई शहर मै बोलाउंछु । यही राखेर भाइ बैनीलाई धेरै पढाउछु अनि आमाको राम्रो ओखतीमूलो गराउँछु ।

बसमा काम गर्दा सो बसमा सधै यात्रा गरिरहने एक जना भलादमी र लालेबीच सानो परिचय भयो । भलादमीले लालेको घर परिवार र उसले गरेको संघर्षको बारेमा सोध्यो । विरानो शहरमा लालेलाई भलादमी आफन्त झैं लाग्यो । उसले भलादमीलाई आफ्नो बारेमा बेलिविस्तार लगायो । एक दिन भलादमीले आफ्नो साथमा भिडियोग्राफरलाई लिएर आयो र लालेको फिल्म खिच्ने कुरा बतायो । देश विदेशमा आफू देखिन पाउने कुराले लाले खुशी भयो । भलादमीले लालेको विहानदेखि साँझसम्मको सम्पूर्ण

क्रियाकलापहरु क्यामरामा कैद गयो अनि लालेको संघर्षको बारेमा लामो अन्तर्वार्ता पनि लियो ।

केही दिन पछि भलादमी आएर भन्यो–आज टि.भी मा तिम्रो फिल्म आउंदैछ ।

उसले ड्राइभरको डेरामा गएर टि.भी हे¥यो । नभन्दै भलादमीले भनेको समयमा लाले टि.भी. मा देखियो । आफूलाई टि.भी. मा देख्न पाउदा लाले निकै खुशी भयो । भोलिदेखि साथीहरुको माझ लालेको छाती गर्वले फुल्यो ।

एकदिन भलादमी फेरि आयो । उसले लालेलाई आफूसंग लिएर गयो । लालेलाई नुहाइ धुवाइ गर्न लगायो र एकजोर सुकिला कपडा पनि दियो अनि लालेलाई आफ्नो कथा यसरी भन्नुपर्छ भनेर सिकायो । त्यो दिन लाले भलादमीको ठूलो घरमा बस्यो । अर्को दिन भलादमीले लालेलाई एउटा भव्य समारोहमा लिएर गयो । त्यो समारोहमा सुकिला कपडा लगाएका सयौं मान्छेहरुलाई लालेले देख्यो र अगाडिको अग्लो ठाउंमा केही मानिसहरुसंग उसले टि.भी.मा देखिरहने 'मन्त्री' लाई देख्यो । भलादमीले लालेलाई लिएर मन्त्री नजिकैको कुर्सीमा राख्यो । मन्त्रीसंगै बस्न पाउंदा ऊ अलमलमा प¥यो , उसलाई त्यो क्षण सपना हो कि विपना भन्ने छुट्याउन गाह्रो प¥यो ।

केही बेरमै भाषण शुरु भयो । लालेले भाषण त बुझेन तर बीच बीचमा आफ्नो नाम आएको भने बुझ्यो । हलको एक कुनामा राखिएको ठूलो

टि.भी. मा फेरि लालेको फिल्म देखाइयो । मन्त्रीले उठेर लालेको संघर्षको चर्चा गरे, लालेको बारेमा बनाइएको फिल्म ( डकुमेन्ट्री) ले अन्तर्राष्ट्रिय पुरस्कार पाउन सकेकोमा बधाइ दिए । मन्त्रीले लाले र भलादमीलाई संयुक्त रुपमा सम्मानित गरे । फ्रेम हालेको ठूलो सम्मानपत्र दिए र केही पुरस्कार पनि । भलादमीले सिकाए झैं लालेले पनि भाषण गयो । समारोह सकियो । जलपानपछि मन्त्री लगायत सबैले लाले र भलाद्मीसंग बसेर फोटो खिचाए । कार्यक्रम सकिएपछि भलादमीसंगै लाले फर्कयो । त्यसबेला उसलाई आफू निकै ठूलो भएको महसुस भैसकेको थियो । जीवनमा त्यस्तो क्षण पनि त आउदो रैछ भनेर लाले दंगदास र खुशी थियो । त्यस दिन पनि ऊ भलादमीको घरमै बस्यो । भलादमीका सबै परिवारले उसलाई निकै मायालु व्यवहार गरे । उसले जीवनमा पहिलोपटक मिठो खाना खायो र मुलायम ओच्छ्यानमा सुत्यो । भोलि विहान उ उठ्दा घाम माथि आइसकेको थियो । ऊ उठ्ने बित्तिकै भलादमीले उसलाई चिया खुवायो र केही ठूला अखवारहरु देखायो जहां लालेका ठूला–ठूला तस्वीर छापिएका थिए । लालेलाई सबै कुरा सपना झैं लागिरहेको थियो । उसले अखवारमा के लेखेको छ भन्ने सोध्न सकेन । भलादमीले बताएपछि उसले यति मात्र जान्यो– उसको फिल्म सबैले मन पराएछन् ।

खाना खाएर ड्राइभरको डेरामा फर्कने बेलामा भलादमीले उसको हातमा पांच हजार रुपैयां थमाइ दिए पुरस्कार भनेर । लाले खुशी हुँदै फर्क्यो । फर्कदा उसले आफ्नो फोटो भएका ५–६ वटा अखवारहरु पनि किन्यो । लाले डेरामा फर्कदा ड्राइभर काममा गैसकेको थियो । ड्राइभरनीलाई उसले संक्षेपमा सबै कुरा सुनायो र यो खुशीको कुरा सुनाउन भनेर लाले त्यही दिन नै घर गयो ।

उसले आफ्नो घरमा गाउँमा आफ्नो प्रगतिको कुरा सुनायो, आफ्नो फोटो छापिएका अखवारहरु. देखायो । उसको परिवारमा खुशीयाली आयो । लालेले अब आफू ठूलो मान्छे भएको कुरा सुनायो । अब आमालाई शहरमा लिएर जाने, भाइ बैनीलाई पनि शहरमै पढाएर ठूलो मान्छे बनाउने कुरा सुनायो । पुरस्कार पाएको रुपैयां आमालाई दिएर केही दिन पछि ऊ शहर फऱ्यो ।

शहरमा आउंदा ड्राइभरले उसलाई काममा राख्न मानेन । बालश्रमिक राख्न नहुने कानुन बनेको लालेले बालश्रम सम्बन्धी पुरस्कार पाएर चर्चित भएकोले उसलाई काममा राख्दा प्रहरीले कारवाही गर्छ भनेर लालेलाई काममा नराखेको भन्ने लालेले थाहा पायो । उसले धेरै ठाउँमा काम खोज्यो तर उसलाई जागिरमा राख्ने साहस कसैले गरेन । बालश्रम सम्बन्धमा शहरमा ठूला वहस चलिरहेका थिए । अखवारं, टि.भी र रेडियोमा लालेको बारेमा चर्चा चल्दै थियो । सबैले लालेलाई बालश्रमीकको रुपमा व्याख्या गरिरहेका थिए । लालेलाई काममा लगाउंदा बालश्रम सम्बन्धी कानुनले समात्ने र सजायमा परिने डर सबैलाई थियो । डुल्दा डुल्दा लालेको खल्ती खाली भयो । अरु ठाउँमा कुनै सिप नलागेपछि एकदिन लाले आफ्नो बारेमा फिल्म बनाउने भलादमीलाई भेट्न गयो । भलादमी महोदय र उनको परिवार त्यहां थिएनन् । लाले सम्बन्धी फिल्म चर्चित भएपछि विदेश बस्ने अवसर पाएकाले उनीहरु सबैजना विदेश गैसकेका रहेछन् । महिनौसम्म शहरमा भौतारिइ रह्यो । कहिले भोकै बस्यो अनि कहिले साथीहरुसंग मागेर खायो । अकस्मात एकदिन उसले आमा सिकिस्त भएको खबर पायो । ऊ हतार हतार गाउँ गयो । आमा निकै सिकिस्त थिइन, उपचारको आवश्यकता थियो । ऊसंग रुपैयां थिएन र रुपैयां आउने श्रोत पनि थिएन । उसलाई कसैले ऋण पत्याएन र एक दिन लालेको आमाले पनि उनीहरुलाई छोडेर गइन् ।

अब लाले अभिभावक विहीन भयो । उसंग धन सम्पत्ती केही थिएन ।' खान पनि नपाउने अवस्था आएपछि लालेका भाइबैनी स्कुल जान छोडे । भाइ बैनीलाई पढाएर ठूलो मान्छे बनाउने सपना बालुवाको घर भत्कियो । बाँच्नको निम्ति नै संघर्ष गर्नु पर्ने भएपनि एकदिन लालेको भाइ पनि गाउँले दाइसंग शहरमा जागिर खोज्न गयो । लालेले भर्खर फर्कदै गरेकी फूलजस्ती आफ्नी बहिनीलाई पनि गाउंले दिदीसंग काम गर्न शहर पठायो र आफू लाहुरे हुन इन्डिया गयो ।

वर्षौं बित्यो लाहुरे भएको लाले गाउं फर्किएन । लालेको बारेमा कसैलाई केही थाहा छैन । तर गाउँमा कहिलेकाही सुनिन्छ ड्रग्स ओसार्ने काममा लागेकोले लालेको भाइ जेलमा थुनिएको छ रे ! लालेकी बहिनीलाई दलालले बम्बैको कोठीमा पुयाएको छ रे !

# १०

# हारजीत

रक्षा बन्धनको दिनमा हातमा डोरो बाँध्न कान्छो छोरा निकै उत्साहित थियो । चलन अनुसार ज्वाई, भिनाजु, भान्जा र पुसाजु आएर सबैको हातमा रक्षा बन्धन ( डोरो) बाधिदिनुभएको थियो । हातमा डोरो बाँध्ने बित्तिकै उ दगुर्दै गेटमा पुग्थ्यो र पल्लो घरको साथीलाई सुनाउथ्यो 'सन्दिपा हेर त मेरो कतिवटा भए?'

पाहुनाहरु गएका थिएनन् । कान्छो मेरा भिनाजुहरुसंग गफमा रमाएको थियो ।

' भिनाजु , यो डोरो फाल्न हुन् है?' कान्छोले सोध्यो ।

भिनाजुले तिहारसम्म राखेर गाई तिहारको दिनमा गाईको पुच्छरमा बाँधिदिनुपर्ने कुरा सुनाउनुभयो ।

कान्छो फेरी बाहिर दगुर्यो । सायद संदिपालाई आफुले पाएको जानकारी सुनाउन गएको होला ।

केहिबेरमा रिसाउदै कान्छो कोठामा फत्र्याे । के भयो भनेर सोध्न नभ्याउदै उसैले भन्यो , 'मैले तिहारसम्म डोरो राख्ने हो भनेको त् संदिपाले ईस् राख्छौ , भोली फाल्ने होला भनिन् । मैले फाल्दै फाल्दीन, नपत्याए बाजी राखाँै भनेको बल्ल चुप लागिन् । मैले तिहारसम्म राखेर त्यसलाई नदेखाई छोड्दिन ।'

कान्छोले डोरोको कुरा गर्दा म झस्किएँ । कान्छो एकोहोरो बोलिरहेको थियो । मैले उसले बोलेको सुन्न छोडेको थिएँ । म हातको रक्षाबन्धन हेरिरहेको थिएँ अनि ३ दशक अघि बुटवल क्याम्पसमा आई एस्सी अध्ययन गर्दाका दिनहरुमा पुगेको थिएँ । कान्छोले तिहारसम्म हातको रक्षा बन्धन राखेर देखाउने कुराले वर्षौंपछी मलाई जितेर पनि हारेको दिनको याद दिलाएको थियो अनि अनायासै मैले बिर्सिसकेकी प्यारी छुच्चिलाई सम्झिएको थिएँ.

... ............. ........

उसको नाम त सुची थियो तर मैले छुच्ची नाम दिएको थिएँ उसलाई ।

फस्ट इअरमा भर्ना भएको दिनदेखि नै ऊ मेरो मन मिल्दो साथी बनेकी थिई । हरेक दिन ऊसँग भेट हुन्थ्यो । केही न केही नयाँ कुरा हुन्थ्यो । प्राय जसो कसैको बारेमा टिप्पणी गरिन्थ्यो । उन्मुक्त भएर हाँसिन्थ्यो । कहिलेकाही विवाद पनि हुन्थ्यो र हप्तौंसम्म छुच्ची र म त्यहि विवादमा रमाउँथ्यौ ।

जनै पूर्णिमाको केही दिन पछि भेट भएको बेलामा छुच्चीको आँखा मेरो हातमा पुगेछ । मेरो नाडीमा भिनाजुले बाँधिदिएको डोरो ( रक्षाबन्धन) थियो । हातको डोरो देखेर छुच्चीले भनि 'ओहो देव ! तिम्रो हातमा त अझैसम्म पनि डोरो रहेछ ।'

'तिमी जस्तो हो र बाँधेको दुई घण्टामै चुँडाल्ने ।' मैले छुच्चीलाई गिज्याउने सुरले भने– 'मैले त यो डोरो तिहारसम्म जस्ताको तस्तै राख्ने हो ।'

तर छुच्चीको नाडीमा पनि डोरो रहेछ, उसले देखाई ।

'मलाई देखाउनको लागि राखेको होला । अब भोलि पर्सीमा चुडेर कहाँ पुग्छ कुन्नी ?' मैले भने ।

'मैले त तिहारसम्म राख्ने हो, बरु तिमीहरुलाई बढी नक्कल गर्नुपर्छ तिमीले नै चाँडो फ्याक्छौं होला ।' छुच्चीले भनी ।

कसले चाँडो फ्याँक्छ भन्ने कुरामा धेरैबेर वादविवाद भयो । अन्तमा छुच्ची र म बाजी राख्ने कुरामा सहमत भयौं । बाजीको नियम यस्तो राखियो तिहारभन्दा अघि जसको नाडीबाट डोरो हराउँछ उसले बाजी हार्नेछ र हार्नेले जित्नेको कुनै एक माग पूरा गर्नुपर्नेछ । यसरी छुच्ची र म बीच डोरोको दिगोपनको होडबाजी शुरु भयो ।

छुच्ची मेरो लागि साथी मात्र थिई, माया मोह केही थिएन । त्यसैले उसलाई नदेख्दा उसको सम्झना आउँदैनथ्यो । म हार्न नचाहने मान्छे, हातबाट डोरो चुड़ालेर फ्याँक्न सकिन । छुच्चीले झन फ्याँक्ने कुरै भएन । दिनमा धेरै पटक नाडीमा बाँधेको डोरोमा आँखा पुग्थ्यो । डोरी देख्ने वित्तिकै मैले छुच्चीलाई सम्झिहाल्थे । भेट नभएको समयमा पनि डोरोले उसको सम्झना गराउथ्यो ।

'देव, अचेल मैले तिमीलाई सम्झिरहन्छु एकदिन छुच्चीले भनी ।

'मैले पनि अचेल पुच्चीलाई बढी सम्झन थालेको छु ।' मैले भने ।

'हो र ?' छुच्चीले भनी 'किन सम्झन्छौ?

'के गर्नु मैले सम्झन भन्दाभन्दै पनि डोरोले तिम्रो सम्झना तानेर ल्याइहाल्छ ।' मैले कुरा नलुकाई भनें ।

'मलाई पनि त्यस्तै हुन्छ ।' छुच्ची हाँसी । 'जेहोस् डोरोले राम्रै काम गरेको छ ।'

समय बित्दै गयो । डोरोले सम्झना ल्याइरहन्थ्यो । सम्झना धेरै आएपछि माया बढ्छ भनेको साँचो रहेछ । विस्तारै मेरो मनमा छुच्चीप्रतिको माया बढिरहेको थियो अनि छुच्ची र म बीचको सम्बन्ध घनिष्ट बन्दै गइरहेको थियो ।

एकदिन मैले डोरो फ्याँक्ने कुरा छुच्चीलाई सुनाए । उसले कारण सोधी । मैले हाँस्दै भने– 'डोरोले तिम्रो सम्झना धेरै गरायो । सम्झना धेरै भयो भने माया बढ्छ रे । माया धेरै भयो भने आफैलाई सम्हाल्नै सकिन्न । त्यसैले न रहे बाँस नबजे बाँसुरी ।'

'तिमीलाई मायादेखि डर लाग्छ ?' छुच्चीले शुष्क स्वरमा सोधी । मैले उसको अनुहारमा हेरे ऊ निकै गम्भीर भएजस्तो लाग्यो । मैले उसलाई त्यो रुपमा कहिल्यै देखेको थिइन । उसले केही कुरा मागे झैं गरी मलाई हेरिरहेकी थिई । मैले उसको मुहारमा हेरिरहन सकिन । दृष्टि र कुराको सिलसिला अन्तै पु¥याएँ ।

त्यस दिनदेखि डोरो हार जीतको कुरा भन्दा बढी मायाको चिनो हुन पुग्यो । छुच्चीले भन्दा पनि मैले छुच्चीलाई बढी माया गर्छु भन्ने  देखाउनको लागि पनि मैले लामो समयसम्म डोरो सुरक्षित राख्नैपर्ने भयो । हाम्रो भेट्ने कम टुटेको थिएन । मित्रताले नयाँ रुप लिएको थियो, सम्बन्ध घनिष्ट बनेको थियो । मुखले दुवैले केही भनेका थिएनौ तर दुवैजना पहिले जस्तो उन्मुक्त थिएनौं ।

दशैको बिदा हुनुभन्दा केहिदिन अघि नै म पहाड घर जानुपर्ने भयो । म उसलाई 'सरप्राईज' दिन चाहन्थे त्यसैले मेरो यात्राको बारेमा छुच्चीलाई केहि बताइन् । म टाढा गएँ छुच्चीसँगको भेटघाट छुट्यो तर सम्झना छुटेको थिएन । जहाँ गए पनि, जुनसुकै बेलामा पनि डोरोको रुपमा छुच्ची मसँगै भए लाग्थ्यो । मलाई उसँगको न्यानोपनको आभाश डोरीले गराइरहन्थ्यो । मैले डोरोको निकै हिफाजत गर्थे । डोरो नचुडोस् भन्ने कुरामा म सधै ध्यान दिन्थें । एकदिन मेरो मिल्ने साथीले मेरो नाडीको डोरो चुडाल्न खोज्यो, त्यसबेला मैले उसलाई निकै नराम्रो गाली गरें । करिव एक सातासम्म त बोलचाल नै बन्द भयो ।

एक महिनासम्म मैले छुच्चीसँग कुनै सम्पर्क नै गरिन । म चाहन्थें– छुच्चीले हारोस् र मेरो जीत होओस् । मलाई लागेको थियो– मैले उसँग कुनै सम्पर्क नगरेपछि उसले बाजीको कुरा विर्सनेछ या मसँग रिसाएर डोरो फाल्नेछे । त्यसो भएपछि जीत मेरै हुनेछ ।

छुच्ची र म बीच जतिसुकै आत्मियता भए पनि, जतिसुकै मायाका कुरा भए पनि मुखै फोरेर एक अर्कालाई माया गर्ने करा भनेका थिएनौं । त्यसैले मैले मनमनै योजना बनाएको थिए– बाजी जितेको मौकामा उसलाई माया व्यक्त गर्नेछु र बाजी जिते वापत जीवनभरको लागि उसको साथ पाउनको निम्ति प्रस्ताव गर्नेछु ।

सम्पर्क विना महिना वित्यो । छुच्चीसँग भेट भएन तैपनि मलाई टाढा भए जस्तो लागेकै थिएन । मैले सम्पर्क नगरेपछि छुच्चीले सम्पर्क गर्ने कुरै भएन । विचरीलाई म कहाँ गएको छु भन्ने त कुरा छोडौं मेरो घर कहाँ हो

भन्नेसम्म पनि राम्ररी थाहा थिएन त्यसैले उसले चाहेर पनि मलाई भेट्न सक्दिनथी ।

तिहार लगत्तै म बुटवल फर्के । डेरामा पुग्ने वित्तिकै म छुच्चीको घर गएँ । मलाई हतार थियो छुच्चीलाई भेट्ने र मनको कुरा खोल्ने । छुच्चीको घर पुग्दा ढोका भित्रबाट बन्द थियो ।

मैले कलबेल थिचें । भित्रबाट 'को हो ?' भन्ने आवाज आयो । मैले छुच्चीको आवाज सजिलै चिनैं ।

'म हो छुच्ची ।' मैले स्वभाविक जवाफ दिए ।

'ओ हो देव...' छुच्ची खुशीले चिच्याएको मैले अनुमान गरें । छुच्ची ढोकातर्फ बढ्दै गरेको पदचाप सुनियो ।

'मैले बाजी जिते होला नि ?' मलाई छुच्चीलाई भेट्न भन्दा कुरा सुनाउन हतार भएको थियो । मेरो सोधाईको कुनै जवाफ आएन । बरु ढोकाको छिट्कनी खुलेको आवाज आयो ।

'पहिले हात देखाउ त डोरो छ कि छैन ?' ढोका खुल्न लाग्दा मैले भने ।

ढोका खुल्यो । केही नबोली छुच्चीले पर्दाको एक छेउबाट आफ्ना दुवैहात म तर्फ तेर्साई । मैले धोका खाने कुरा भएन– हात छुच्चीकै थिए । म अचम्भित भएँ– उसको हातको नयाँ सजावट देखेर । उसका दुवै हत्केला मेहन्दीले रंगिएका थिए । औंलामा सुनको औंठी थिए, नाडीमा सुनका चुरा अनि केही राता चुरा थिए । म नराम्ररी मर्माहित भए ।

'तिमीले जित्यौ देव। तिमीले साँच्चै जित्यौ, म हारेँ ।' रोदन मिश्रित स्वरमा छुच्चीले भनि । मैले पर्दा हटाएँ । छुच्ची मेरो सामु थिई । उसको सिउँदो सिन्दूरले रंगिएको थियो, घाँटीमा मंगलसूत्र झुण्डिएको थिए । छुच्चीले मलाई एकटकले हेरिरहेकी थिई । उसको आँखाबाट झरेका आँशु गालामा बग्दै थियो ।

'तिमीले जित्यौ देव । धेरैपछि जित्यौं । खै म अब के दिन सक्छु र ?' छुच्चीले मेरो हात समात्दै भनी । मैले त्यस्ता क्षण पनि आउला भन्ने कल्पनासम्म पनि गरेको थिईन । त्यसैले सबै कुरा मलाई सपना जस्तै लाग्दै थियो । म चेतनाशून्य बन्दै गैरहेको थिएँ । मैले निधो गर्न सकिन मैले हारें कि जिते ? हार जीतको खेलमा मैले के पाएँ ?

# ११

# हजुरआमा

मैले प्रभाको निम्तोलाई अस्वीकार गर्न सकिन, त्यसैले ऊसँगै उसको घरतर्फ लागें ।

घरभित्र पस्नै लाग्दा कपाल सेतै फुलेकी लगभग ६५–७० वर्ष उमेरकी बुद्ध महिलासँग जम्काभेट भयो ।

‘मेरो हजुरआमा’ प्रभाले सुस्तरी मलाई भनी । मैले हात जोडेर नमस्कार गरें । वृद्ध महिलाले नमस्कार नफर्काएर अलिक कडा स्वरमा प्रभालाई सोधीन् ‘को हो ? मैले चिनिन ।’

‘हाम्रो स्कूलको सर, हामीलाई पढाउनु हुन्छ । ’ प्रभाले परिचय दिई ।

‘ए मास्टर पो !’ हजुरआमाले ठूलो स्वरमा भनिन् र मलाई नमस्कार गरिन् । अघि मैले नमस्कार गर्दा ‘नमस्कार’ नफकाउने अनि अहिले नमस्कार गर्ने भनेर मनमनै मुर्मुरिएँ तर देखाउन कै लागि भने नमस्कार फर्काएँ ।

मलाई बूढाबूढीसँग कहिल्यै बस्नु परेन । त्यसैले उनीहरुको बानी व्यवहारसँग म त्यति परिचित थिईन । तर साथीहरुले बूढाबूढीहरु साह्रै अप्ठ्यारा हुन्छन् , सानालाई दबाउन खोज्ने भावना हुन्छ उनीहरुको बूढाबूढीहरु किचकिचे, जे कुराको पनि उल्टो अर्थ लगाउने र फोहोरी हुन्छन् भनेको मैले सुनेको थिएँ । मलाई प्रभाको हजुरआमा पनि त्यस्तै छन् कि जस्तो लाग्यो । उनीसँग बसेर नानाथरी कुरा सुन्नुभन्दा नबस्नु नै बेश भन्ने

ठानेर मैले 'पछि बसौला' भनेर फर्कन खोजेँ तर प्रभाले पटक्कै मानिन । म उसँग भित्र गएँ । मलाई बैठकमा बसालेर प्रभा बाहिर निस्की र कोठामा हजुरआमा पसिन् ।

'बाबू जत्रा त मेरा नाती नातिना छन्, त्यसैले प्रभाले सर भने पनि मैले सर सर भन्दिन । बाबु रिसाउने त हैन ?' हजुरआमाले मेरो नजिकै बसेर मलाई हेर्दै भनिन् ।

' तपाईको त् सर होइन नि' मैले हास्दै भनें । 'मलाई बाबु छोरा, नाति जे भने पनि हुन्छ । उमेर अनुसारको साइनो गर्दा म किन रिसाउने ?'

हजुर आमाले मेरो ठेगाना सोधिन, उमेर, शिक्षा र ससुराली पनि सोधिन् । मैले सोधेका सबै कुरा बताएँ । कुराकानी चलेकै बेला प्रभा पनि त्यहिँ आएर बसी ।

'यत्रो उमेरसम्म पनि विहे किन नहुनु ?' म अविवाहित हो भन्दा हजुरआमाले विश्वास मानिनन । उनले प्रभातर्फ हेर्दै सोधिन् 'हो र ?'

'खै हामीलाई पनि त्यसै भन्नुहुन्छ के !' प्रभाले भनि ।

'मलाई झूठ बोलेर के फाइदा ?' मैले भनें । 'विहे गरेको भए त विहे भैसक्यो भनिहाल्थे नि ।'

'विहे गरेको छु भन्ने हो भने त केटीहरु पछि लाग्दैनन् त्यहि भएर ठिटाहरुले बिहे गरेको कुरा लुकाउँछन् ।' हजुर आमाले हाँस्दै भनिन् । उनको अप्रत्यक्ष आरोप सुन्दा मलाई झनक्क रिस उठ्यो । तर म केहि बोलिन । प्रभा उठेर चिया पकाउन गई । हजुर आमाले एउटा घटना सुनाइन् । उनले भने अनुसार उनको गाउँको स्कूलमा यौटा शिक्षक थियो, जसले विहे

नभएको कुरा बताएको थियो । उसले केटीहरुसँग बढी हेलमेल गर्‍यो । एकपटक उसले आफैले पढाउने केटीलाई नै लिएर भाग्यो । पछि गाउँलेले पत्ता लगाएछन् –त्यो शिक्षकको त पहिल्यै बिहे भैसकेको रहेछ ।

हजुरआमाले मलाई पनि त्यस्तै शिक्षकको रुपमा हेरेको मलाई महशुस भयो । हजुरआमाले मेरो चरित्रमाथि औँला उठाउन खोजेको मलाई सह्य भएन ।

‘म त्यति नालायक छैन बुझ्नुभयो ।’ मैले रिसाउँदै भनें । ‘मेरा आफ्नै साथी छन् । कलेजमा आफूलाई मिल्ने ’क्लास’ का थुप्रै केटीहरु छन् । चाहँे भने मैले म बराबरका केटीलाई बिहे गर्न सक्छु । अन्त केटी नपाए झैं स्कूले केटीको पछि कोही लाग्छ होला ?’

म रिसाएको कुरा हजुरआमाले चाल पाइन् । उनले हत्तपत्त भनिन् ‘मैले बाबुलाई भनेको कहाँ हो र ? त्यसो पनि गर्छन् भनेको मात्र पो ।’

‘मेरो लागि मेरा विद्यार्थीहरु भाई बैनी बराबर छन् । उनीहरुप्रति कुदृष्टि राख्ने कुरै हुँदैन ।’ मैले चर्को स्वरमा भनें ।

प्रभाले चिया ल्याएर हामीहरुलाई दिई । हामीले चिया पिउन लागेपछि ऊ पनि त्यहिँ बसी ।

‘तरुनी भा केटीहरुसँग मास्टरले हेलमेल बढी गरेको मलाई पटक्कै मन पर्दैन ।’ चिया पिउँदै हजुरआमाले भनिन् ।

‘हजुरआमाले पनि कस्तो नचाहिंदो कुरा गर्नुहुन्छ ।’ मैले केही बोल्नु अघि नै प्रभाले हजुरआमालाई हकारी ।

आधा घण्टाको बसाईमा हजुरआमाले मलाई नानाथरी कुरा सुनाएर साह्रै दिक्क पारिन् । मुखभरीको जवाफ दिन त मलाई पनि आउँथ्यो तर एकदिन भेट्दा पनि नराम्रो छाप किन छोड्ने भनेर सबै बोली सहेर बसें ।

'बूढी छुच्ची रै'छ नभन्नु है बाबु ।' हिंड्ने बेलामा हजुरआमाले भनिन् ।

'हजुरआमाले भनेको. कुराले पीर नमान्नु होला है ।' भन्ने आग्रह प्रभाले पनि गरि ।

त्यसदिन देखि बूढाबूढीको बारेमा मेरो मनमा पनि नकारात्मक छाप पन्यो । अरुले भने झैं बूढाबूढीहरु कर्कशा, कुरौटे, कचकचे र शंकालु हुन्छन्, अर्काको खेदो खन्छन् भन्ने कुरामा म पनि सहमत भएँ ।

समय वित्दै गयो । दिनहरु हप्तासंग साटिए । अनि हप्ताहरु महिनासँग साटिएर ७–८ महिना पनि विते । त्यस अवधिमा म कहिल्यै पनि प्रभाको घर गइन । अझ भन्ने हो भने कुनै पनि विद्यार्थीको घर नजाने प्रण गरेर बसें ।

७–८ महिनापछि एकछिन पहाड जानको लागि बस चढ्न बसपार्क गएँ । म एक्लै बस पर्खिरहेको थिएँ, कहाँबाट हो कुन्नी प्रभाकी हजुरआमा मेरो सामु टुप्लुक्क आइपुगिन् ।

म उनको सामु पर्न चाहन्नथेँ तर पनि एक्कासी उत्पन्न भएको परिस्थितिले गर्दा म भाग्न सकिन । औपचारिकता निभाउनकै लागि भए पनि मैले नमस्कार गरें ।

'मास्टर बाबु त देखापर्नै छोड्नु भयो ?' हजुर आमाले नमस्कार फकाउँदै भनिन् ।

'अचेल फुर्सदै हुन्न ।' मैले छोटो झूट बोलें ।

'बाबु कहाँसम्म ?' हजुरआमाले सोधिन् । मलाई त टाढै पुग्नु पर्ने थियो तर पनि तानसेनसम्झ मात्र भनेर ढाँटे ।

'म त अलि टाढासम्म पुग्ने हो । जे होस् त्यहाँसम्म भए पनि साथै जाने भइयो' हजुरआमाले भनिन् । 'मैले सिट रोकेकी छु, जाऊँ ।'

म हजुरआमाको साथ छोड्न चाहन्थे । जानाजान झन्झटमा को फस्छ ? भनी मैले 'मेरा अरु थुप्रै साथीहरु छन्, उनीहरुले सिट रोकेका छन् भनेर हजुरआमालाई पठाएँ ।

बसका सबै सिट भरिसकिएका थिए । हजुरआमाको. छेउको सिटमा पनि अर्कै मान्छे बस्यो । बस चल्न शुरु गयो । म त्यहि बसमा नगए अर्को बस दुई घण्टा कुर्नुपथ्र्यो, दुई घण्टा ढिला भएमा म गन्तव्यमा पुग्न सक्दिन थिएँ, त्यसैले म पनि त्यहि बसमा चढें । सिट थिएन, मैले उभिएरै यात्रा' गर्नुपर्ने भयो । बस चल्यो । बस हिडिरहेको बेलामा धेरैपटक हजुर आमासँग हेराहेर भयो, तर उनी केही बोलिनन् ।

'हजुरआमाले भनेको मानेको भए बस्न पाइन्थ्यो ।' मेरो मनले भनिरहेको थियो तर म भने हजुरआमाको कचकच सुनिरहनु भन्दा उभिएर यात्रा गर्नु नै राम्रो मानिरहेको थिएँ । खाल्टाखुल्टी भएको बाटोमा बस हिंड्दा कहिले म अगाडि हुत्तिन्थेँ त कहिले पछाडि ठोक्किन्थेँ । म धेरै पटक त्यसो गरिरहेको हजुर आमाले देखिरहेकी थिइन् । बुटवलदेखि २० किमि पर केराबारी पुग्नै लाग्दा हजुरआमाले भनिन् 'बाबु तपाई यहाँ बस्नुस, म भुईमा बस्छु ।'

हजुरआमाको बोलीमा मप्रति करुणा माया मिसिएको आभाष मैले पाइन । मलाई उनको प्रस्ताव उचित लागेन, त्यसैले म सिटमा बस्न गइन ।

तानसेनसम्मको यात्रा निकै कष्टकर भयो । 'यो बुढी नभेटिएको भए त पहिल्यै सिटमा बस्थे नि ।' मैले मनमनै हजुर आमासँग रिसाएँ । बस तानसेन बसपार्कमा रोकियो । हजुर आमासँग फेरि भेट नहोस् भनेर म बस रोकिने वित्तिकै ओर्लेर कुलेलाम ठोकें । हजुरआमा कता लागिन्, थाहा भएन ।

मलाई टाढै पुग्नुथियो, त्यसैले नरोकिएर यात्रा शुरु गरें । बतासेडाँडा उक्लिएर तेसैंतेर्सो चण्डीभञ्ज्याङ्ग पुगें अनि त्यहाँबाट उत्तरतर्फ हानिएँ । आधा बाटो पार नगर्दै सूर्यले धर्तिबाट विदा लिए । विस्तारै अँध्यारो बढ्दै थियो, म हतार हतार पाइला चाल्दै थिएँ । केही बेरमै म हिंडेको बाटो छुट्टियो । म तल्लो बाटो छोडेर माथिल्लो बाटो लागें । मेरो हिंडाई छिटो थियो, बाटो अप्ठ्यारो थियो । अँध्यारोमा हिंड्दा मैले सन्तुलन गुमाउन पुगेछु । कुनै ढुंगामा ठक्कर खाएर म ढुन्मुनिएर लडें । त्यसपछि के भयो मलाई थाहा भएन ।

होश खुल्दा म अर्कै ठाउँमा थिएँ । जुन उदाइसकेका थिए । जुनको उज्यालोमा म  वरिपरीका दृश्यहरु देख्न समर्थ थिएँ । मैले देखें – म हजुरआमाको काखमा टाउको राखेर सुतिरहेको थिएँ । मेरो टाउकोमा चिसो बस्तु टासिए भौं थियो, टाउको कपडाले बाँधिएको थियो । आफ्नो मजेत्रोले हजुरआमाले मलाई हम्किरहेकी थिइन् ।

मैले केही सोध्नु अघि नै हजुरआमाले सारा घटना बताइन् । म लडेपछि बेहोश भएछु । माथिल्लो बाटोबाट लड्दै तल्लो बाटोमा पुगेछु । मलाई

टाउकोमा चोट लागेर पल्टिरहेको बेलामा त्यहि बाटो आउँदै गरेकी हजुरआमाले मलाई फेला पारिछन् – घटनाक्रम यहि थियो । हजुरआमाको मजेत्रो च्यातिएको थियो । मैले अन्दाज लगाएँ– हजुरआमाले मजेत्रो च्यातेर मेरो घाउ बाँधिदिएकी रहिछन् ।

‘मास्टर बाबु पनि यतै आउने भनेको भए त सँगै आउन हुन्थ्यो नि ।’ हजुरआमाले मेरो टाउकोमा हात राख्दै भनिन् । ‘मैले बाबुलाई भेट्छु भनेर कति दौडिए तर भेट्नै सकिन । बाबु एकपटक पनि पछाडि फर्कनु भएन ।’

म केही नबोली चुपचाप आकाशतर्फ हेरिरहे ।

‘बाबु कहाँसम्म पुग्ने होला ?’ हजुरआमाले सोधिन् । यसपाली भने मैले साँचो कुरा बताएँ ।

‘यस्तो हालतमा त बाबु त्यहाँ पुग्न सक्नुहुन्न । मेरो छोराको घर यहाँबाट नजिकै छ, आज त्यहीँ बसेर सन्चो भएपछि भोलीपर्सी गए हुन्छ ।’ हजुरआमाले भनिन् ।

म उठें । टाउको एकदम गह्रौं भइरहेको थियो । शरीर निकै दुःखेको थियो । हातखुट्टा लगलगाईरहेका थिए । हजुरआमाले नभने पनि म हिंड्न सक्ने अवस्थामा थिइन् । अब भने मलाई हजुरआमाको साथ नहिंडी सुखै थिएन । त्यसैले मैले उनको कुरामा मौन समर्थन जनाएँ ।

हजुरआमा उठिन् । उनले आफ्नो ठूलो झोला बोकिन् । म लडे पनि मेरो झोला पिठ्यूमा टाँसिएकै थियो । मैले नमान्दा नमान्दै पनि हजुरआमाले मेरो झोला समेत बोकिन् अनि मलाई डो¥याउँदै हिडिन् ।

हजुरआमाले हात समातेर हिंड्दा मलाई सानो छँदा आमाको हात समातेर हिडेको जस्तै लागिरहेको थियो । हजुरआमाले मलाई दिएको स्नेह, ममताको अगाडि म पग्लंदै गैरहेको थिएँ । हजुर आमाको बारेमा मैले पहिले सोचेका कुरा सम्झेर आफूलाई आत्मग्लानी भैरहेको थियो । हजुरआमाहरु प्रतिको मेरो धारणा फेरि एकपटक परिवर्तन भएको थियो । हजुरआमाप्रति मनमा श्रद्धा उर्लिरहेको थियो । म हजुरआमाको खुट्टा समातेर क्षमा माग्न चाहन्थे, हजुरआमाको काखमा टाउको अडयाएर अघाउन्जेल रुन चाहन्थे । तर ममा त्यसो गर्ने आँट आएन । हजुरआमाको हात समाउँदै म लम्किदै गएँ अनि उनको ममताभित्र हराउँदै गएँ, आत्मियताभित्र विलाउँदै गएँ ।

तिलोत्तमा, रुपन्देही

# १२

# गुडबाई ओल्डम्यान

अघिल्लो साँझदेखि पानी पर्ने र रोकिने क्रम चलिरहेको थियो । मौसम सफा नभएपनि मैले काठमाडौंको लागि यात्रा प्रारम्भ गरे ।

बसमा चढेर आफ्नो सिट खोजें । बसमा हिँड्दा कहिलेकाँही वान्ता हुने भएकोले मैले झ्याल तर्फको सिट लिएको थिएँ तर मेरो सिटमा भने अर्कै केटी बसिसकेकी थिई । मैले आफ्नो टिकट देखाएँ, आफ्नो सिट छोड्न अनुरोध गरें ।

" ऊ त्यहाँ पनि सिट खाली छ, त्यहाँ बसे पनि हुन्छ" निकै लापरवाही साथ केटीले भनी । मैले पनि मेरो सिट चाहिने कुरामा अड्डी लिएँ ।

"आफ्नो कार भए झैं भनेकै सिट चाहिने.." केटी फत्फताई अनि एकपटक मतर्फ हेरेर उसले नराम्ररी अनुहार कुच्याई । उसको व्यवहार देखेर मलाई मनमनै हाँसो उठ्यो । बस चल्नअघि उसले मेरो सिट छोडेर आफ्नो सिटमा –मेरै बगलमा) बसि ।

बसले बुटवल छोडयो । रामनगरमा आर्मी चेकिङ्गपछि बसले गति लियो ।

'तपाँई कहाँ पुग्ने ?' पहिलो पटक उसले कुरा कोट्याई ।

"काठमाडौं ।" मैले छोटो उत्तर दिएँ ।

“ओह..” उसले पीडा महशुस गरे गरी अनि अर्कोतर्फ फर्किएर बिस्तारै पीडा पोखी “..लंग जनीं विथ ओल्ड म्यान, हाउ बोरिङ जर्नी..!”

ऊ म भन्दा धेरै कान्छी जस्ती त देखिन्नथी तर पनि उसले मलाई बुढो मान्छे भनिरहेकी थिई । उसले मलाई ओल्ड म्यान विशेषण दिंदा मनमनै रिस पनि उठ्यो । दौडिरहेको बस के भएर हो कुन्नी एक्कासी रोकियो । सबै यात्रुले सन्तुलन बिगारे । बसको झड्काले गर्दा सम्हालिन खोज्दा खोज्दै पनि म सहयात्री केटीतर्फ ढल्किन पुगें ।

“सिधा बस्न सकिन्न ? टाँसिनै आउन पर्छ र ?” केटीले अनावश्यक रिस देखाई ।

“म मात्रै ढल्केको हो र बस नै ढल्केपछि म के गर्ने ? ” मैले पनि रिसाएरै भनें । उसले हामी दुईको बीचमा आफ्नो सानो झोला राखेर सिमाना छुट्याई ।

शायद मसँग बस्नु परेकोले होला केटी निकै छट्पटाइरहेकी थिई । बारम्बार उसले बसमा खाली सिट खोजीरहेकी थिई । बसका पुरै सिट भरिएका थिए, त्यसैले ऊ अर्को सिटमा सर्न पाइन । बसले सुनवल पार गयो ।

सिमसिमे पानी परेकोले झ्यालबाट बस भित्र बाछिटो पस्यो । त्यसैले मैले झ्याल बन्द गरें ।

“ झ्याल किन बन्द गरेको ?”– केटीले उत्तिखेरै प्रतिक्रिया जनाई– “गर्मीले मर्नै लागिएको छ ।”

मैले बाछ्टिटो पसेकाले झ्याल बन्द गरेको कुरा बताएँ । “पानीले भिजाउँछ भनेर डराउने मान्छे पनि किन झ्याल नजिक बस्न हत्ते गरेको नि”– उसले चर्को स्वरमा भनी । वल्लोपल्लो सिटका मान्छेले टाउको घुमाएर हामीलाई हेरे । उसको रुखो व्यवहार देख्दा मलाई निकै रिस उठ्यो । तर पनि उसँग बढी वादविवाद गर्नु आवश्यक लागेन । चुप लागेर निदाएको अभिनय गरें । अभिनय गर्दा गर्दै म साँच्चै निदाएछु । उठ्दा बसले कावासोती नाघिसकेको थियो । बसमा केही यात्रीहरू थपिएका थिए । ती मध्ये उभिएको एक यात्रीसँग मसंगै बसेकी केटीले निकै मिठासपूर्ण गफ गरिरहेकी थिई ।

“यस्तो बोरिङ जर्नी त कहिल्यै भएको थिएन ।”– केटीले आफ्नो नजिकै उभिएको केटालाई सुनाई ।

“किन ?“–केटाले उत्सुकता देखायो ।

केटी मतर्फ फर्किई । मैले उनीहरूको गफ सुन्न निदाएको अभिनय गरेको थिएँ, तर केटीले म निदाएको नै ठानी । “मलाई ओल्ड म्यानसंग ट्राभल गर्न निकै बोर लाग्छ“–उसले मतर्फ संकेत गर्दै भनी ।

“जर्नीमा राम्रो कम्पनी भेटिएन भने मलाई पनि बोर फिलिङ्ग हुन्छ” – उभिएको केटाले नेपाङ्ग्रेजी भाषामा केटीको कुरामा समर्थन जनायो ।

बस दौडिरहेको थियो. केटा र केटिको गफले घनिष्टता प्राप्त गरिरहेको थियो । अनि मैले निदाए झैं गरी उनीहरूको कुरा सुनिरहेको थिएँ । केटीले घुमाई फिराई पाका मान्छेहरूको विरुद्धमा बोलिरहेकी थिई, अनि केटाले उसको कुरामा ’घिउ’ थपिरहेको थियो ।

"मलाई त ओल्ड म्यानहरूको नियत नै खराब लाग्छ "– केटीले भन्दै थिई "ओल्ड म्यान आर डेन्जर देन हङ्ग्री क्याट ।"

"हङ्ग्री क्याट होइन हंग्री डग"–केटोले बीचमै थप्यो । दुबैजना गलल्ल हाँसे । मलाई उनीहरूको वार्तालाप पटक्कै मन परेको थिएन, त्यसैले निदाएको अभिनय गर्न छोडें ।

"कहाँ आईपुग्यो ?" म निदाएको छैन भन्ने जानकारी दिन निरर्थक प्रश्न गरें ।

"बोर्डहरूमा लेखेको छ है ठाउँको नाम......" केटीको संकेत सडक छेउका पसल अगाडि राखिएका साईनबोर्डतर्फ थियो ।

म उठेको थाहा पाएर उनीहरूले गफको विषयवस्तु बदले । नारायणगढ पुगेपछि नजीकैका दुई सिट खाली भए । मसंग बसेकी केटी र उभिएको केटो ती दुई सिटमा गएर बसे । मसँग बस्दा झर्को मानेकी केटी नयाँ केटोसँग बस्न पाउँदा भने प्रफुल्लित थिई ।

रामनगर पुग्दासम्म उनिहरु दुबै निकै घनिष्ट भैसकेका थिए । रामनगरमा खाना खान बस रोकिदा दुबै ओर्ले । एकै ठाउँमा बसेर दुवैले खाना खाए केटोले पैसा ति¥यो । त्यसको साटोमा केटीले चाउचाउ बिस्कुट र जम्बो 'कोक' किनीदिई ।

केहीबेरको विश्रामपछि बस फेरि मुग्लिङ्गतर्फ हुँइकियो । मलाई ती केटाकेटीहरूको व्यवहार निकै रोचक लागिरहेको थियो । मेरो ध्यान उनीहरूतर्फ नै केन्द्रित थियो ।

केटी निस्फिकी साथ केटोसँग टाँसीएकी थिई । केटोले कुरा गर्दा बारम्बार केटीको गाला नजिक आफ्नो ओंठ पु¥याउँथ्यो । कहिलेकाहीँ केटोले केटीको कपाल तान्थ्यो, सुस्तरी कान बटाथ्र्यो अनि मायालु पाराले केटिको नाक समातेर हल्लाउन पनि पछि पर्दैनथ्यो । यसो गर्दा केटीले प्रतिवाद गर्दिनथीं ! केही लजाउँथी मात्र । उनीहरूको व्यवहार र कुराकानी सबैको लागि रोचक बनिरहेको थियो ।

सिमसिमे पानी त परिरहेकै थियो । मुग्लिङ्ग पुग्दा कालो बादलले आकाश डम्म ढाक्यो । अनि बिस्तारै घनघोर वर्षा सुरु भयो । कृष्णभिरमा पैह्रो गएर बाटो बन्द हुने त होइन भनेर बसभित्र गाँईगुइँ चल्यो ।

मुग्लिङ्गमा धेरै मान्छे ओलिंए र केही मान्छे चढे । बस फेरि आफ्नै गतिमा हुँइकियो । मुग्लिङ्ग पुगेपछि भने केटोको व्यवहारमा केही परिवर्तन आयो । उसले घरिघरी बसको ढोकातर्फ हेथ्र्यो । ढोका नजिकै मुग्लिङ्गबाट चढेकी एउटी युवती बसेकी थिई । संभवतः केटोको ध्यान त्यही युवतीतर्फ तानिएको थियो । केटो र केटीबीच त्यति सारो बोलचाल भएन । कुरिनटार पुग्दासम्म केटो धेरै पटक तन्कियो, धेरै छटपटायो । तेल भर्न बस रोकिएको मौका पाएर केटो पनि बसबाट ओर्ले झैं गर्यो । बस चल्यो, तर केटो आफनो सिटमा फर्केन । बसले केही किलोमिटर दूरी पार गर्दा केटोले अघिल्लो सिटमा बसेकी यवतीसँग बोलचाल बढाइसकेको थियो । विवश केटी केटोको बदलिंदो व्यवहार हेर्न बाध्य थिई ।

मैले केटीलाई जिस्काउने पाराले हेरें अनि मनमनै उसलाई भने– ’खुच्चिङ्ग खाईस् ।’

वर्षाले उग्र रुप देखायो । पहिरोले बाटो थुनिन्छ कि भन्ने त्रासले सबैजना डराइरहेका थिए । कृष्णभिर पुग्नै परेन । डाहकी खोलामा पुग्दा सानो पहिरो खस्यो । बस अगाडि जानै पाएन । म चढेको बस रोकिएपछि त्यस पछाडिका सबै बस रोकिए ।

घनघोर पानी परेकोले ओर्लने कुरा आएन । म सिटमै बसेर बाटो खुल्ने प्रतिक्षा गर्दै युवती र केटोका व्यवहार हेरिरहें ।

समय बित्दै गयो । काठमाडौं पुग्ने बेला सम्ममा त्यही रोकिनु प¥यो । डोजर आएर पहिरो हटाएपछि बस अगाडि बढ्यो तर यात्रा लामो हुन पाएन अगाडि झन ठूलो पहिरो गएको रहेछ । बस फेरि रोकियो ।

"यो पहिरो कटेपछि उता बस पाइन्छ रे !" बसभित्र कसैले यो खबर सुनायो । धेरै यात्रीहरू बसबाट ओर्लेर हिंड्न थाले ।

"गए पनि के गर्नु, कृष्णभिरमा पहिरो गएको रैछ भने व्यर्थै दुःख पाइन्छ ।" मैले सबैले सुन्ने गरी भनें । मलाई हिडेर पहिरो कटेपनि काठमाडौं पुगिएला जस्तो लागेन ।

अरुसँगै केटो पनि ओल्यो । 'जाने होइन ?' भनेर केटोले एकपटक केटीलाई सोधेको थियो तर केटीले जवाफ दिनु अघि नै ऊ अर्की युवतीसँग बाहिरीसकेको थियो । केटीले ओर्लने जाँगर देखाइन । बसमा केटी, म, ५–६ जना अरु यात्रु र बेसका कर्मचारी मात्र बाँकी रह्यौं । केही बेरमा बस नजिकै सानो पहिरो खस्यो । एउटा ढुंगा उछिट्टिएर बसको झ्यालको शिशा फुट्यो । नजीकको सिटमा कोही नभएको हुनाले दुर्घटना हुन पाएन । बसमा बसिरहनु झन जोखीमपूर्ण देखियो । प्रहरी आएर सकेसम्म छिटो त्यो ठाउँ छोड्न सुझाव दियो । त्यसपछि सबै आत्तियौं । बस फर्काउन मिल्ने

नभएकोले हिडनु बाहेक अर्को विकल्प नै रहेन । बसबाट सबै ओर्लियौं । सबैजना हिंडीसक्दा पनि केटी बसको ढोका नजीक उभिइरही । ऊसँग दुईवटा साना ठूला झोला रहेछन् त्यसैले ऊ उभिएकी रहिछ ।

“बैनीको भोला रहेछ । दुईटा झोला कसरी लग्नुहुन्छ ? बसमा छोड्नु भएन ।” कन्डक्टरले सुनायो । मलाई उसको अवस्था  देख्दा दया लाग्यो । उसले नराम्रो सोंचे पनि मैले उसलाई दुःख पाएको देख्न उचित लागेन ।

“मेरा सामान छैन । यौटा झोला म बोकि दिउँला, हुन्न ?” मैले केटीलाई सुनाएँ अनि उसको जवाफको प्रतिक्षा नगरी भोला उठाएँ । पानी परिरहेकै थियो । छाता ओढे पनि छाताले ओत दिन सकेको थिएन । केटी र म सँगसँगै हिडेका थियौं तर एक आपसमा बोलेका भने थिएनौं ।

“अब के गर्छ्यौं?” मैले नै मौनता भंग गरें ।

“बुटवल फर्कन्छु ।” उसले छोटो उत्तर दिई ।

“म पोखरा जान्छु । बाटो खुले यतैबाट जान्छु नत्र प्लेनमा भएपनि काठमाडौं जानु पर्ला ।” आवश्यक नभएपनि कुरा लम्ब्याउन उसलाई सुनाएँ तर उसले प्रतिक्रिया जनाईन ।

करिब ४५ मिनेट हिडेपछि बुटवल फर्कन लागेको बस फेला प¥यो । ऊ बसमा चढेर गई । जाने बेलामा धन्यवाद सम्म पनि भनिन ।

“कस्ती घमण्डी केटी ।” मैले आफैसंग भने ।

झमक्क साँझपर्दा म मुग्लीङ्ग पुगें । भोली दिउँसोसम्म बाटो खुल्न सक्छ भन्ने हल्ला चलेकाले पोखरा फर्कन मन लागेन । निकै मेहनत गरेर होटलमा यौटा कोठा खोजें । पानी पर्न रोकिएकोले भोलीपल्ट बाटो खुल्छ जस्तो विस्वास लागेको थियो तर व्यथै होटललाई पैसा तिर्न पर्ने भयो भनेर दिक्क पनि लागेको थियो ।

खाना खाएर बाहिर सडक घुम्न निस्कदा सकि नसकी झोलाहरू बोकेर बाटोमा हिडीरहेकी उही केटीलाई भेटें ।

“बुटवल गईनौ ?” मैले सोधें ।

“पहिरोले बुटवल जाने बाटो पनि बन्द भएछ । यहाँ बस्न खोजेको होटलमा खाली कोठाहरू नै रहेनछ ।” यसपाली भने ऊ राम्ररी बोली ।

“तपाई जानु भएन ? ”म बोल्न नभ्याउँदै उसैले सोधी । मैले छोटकरीमा आफ्नो स्थिति बताएँ ।

“मैले के गर्नेहोला ?” उसले सुस्केरा छोड्दै भनी । बसमा उसले गरेको व्यवहार सम्झिदा त उसलाई वास्तै नगरौं जस्तो लागेको थियो । तर मानवीय नाताले त्यसो गर्न दिएन । उसलाई समस्याको कुनै समाधान निस्कला भनेर आफू बसेको होटलमा लिएर गएँ तर त्यहाँ कुनै कोठा नै पाउन सकिएन ।

“मेरै कोठामा सुते हुन्न ।” मैले प्रस्ताव राखें । मेरो प्रस्तावको उसले गलत अर्थ लगाउली भनेर झटपट भनें “मसंग स्लीपीङ ब्यांग छ म बाहिर बरण्डामा कतै सुतिहाल्छु । तिमी कोठामा सुते हुन्छ ।” बाध्यात्मक स्थिति थियो । केटीले नाई भन्न सकिन । खाना खाईवरी केटीलाई कोठामा पु¥याएँ । म कोठाबाट जोडिएको सानो बरण्डातर्फ लागें ।

"ढोकामा चुक्कुल लगाएर सुत्नु ।" उसलाई मैले अह्राएँ । "अचेलको जमानामा कसैको नियत ठिक हुदैन । अझ ओल्ड म्यान आर डेन्जर देईन हंगी क्याट ।"

उसले बसमा भनेको वाक्य उसैलाई सुनाएँ । केटीले अँध्यारो मुख लगाई, म बाहिर निस्केर ढोका ढप्काईदिएँ ।

जसोतसो बाहिर रात कटाएँ । म उठ्दासम्म केटी भने उठेकी थिइन । मैले ढोका ढक्ढकाए ।

"को हो ?" भित्रबाट आवाज आयो ।

"म ओल्ड म्यान " मैले हाँस्दै भने । अनि चिया पिउन बाहिर निस्कें ।

काठमाडौंतर्फको बाटो ४–५ दिनसम्म खुल्न नसक्ने जानकारी पाएँ । बुटवलतर्फको बाटो भने राती नै खुलिसकेको रहेछ । मैले यो कुरा केटीलाई सुनाएँ ।

केही बेरपछि केटी र म बाटोमा थियौं– ऊ बुटवल फर्कने अनि म पोखरा जाने बस पर्खेर ।

"मैले तपाईलाई धेरै दुःख दिएँ हैन?" उसले सुनाई ।

"हो नि ।" मैले हाँस्दै भने ।

"मान्छेबाट गल्ती भैहाल्छ ।" उसले शुष्क स्वरमा भनि "..प्लीज फरगीभ मी ।"

म केही बोलीन । बुटवल जाने बस भेटियो ।

“ह्याभ अ नाईस जर्नि ।” केटी बसमा चढेपछि मैले भनें , केटी मुसुक्क हाँसी ।

बस चल्न सुरु गर्यो ।

“गुडबाई ओल्ड म्यान..” हाँसी हाँसी उसले हात हल्लाई । यसपाली उसले ओल्ड म्यान भन्द्रा मलाई रमाइलो लाग्यो ।

“बाई... ” मैले हात हल्लाएँ । बसले गति लियो । अनि केही क्षणमै नारायणगढ जाने बाटोतर्फ मोडिएर आँखाबाट ओझेल भयो ।

मैले उभिएर बस गएको दिशातर्फ हेरिरहें । यात्रा निरर्थक बनेको थियो तैपनि त्यति दु:ख लागेको थिएन ।

“ओल्ड म्यान....” यौटा रमाइलो विशेषण पाएको थिएँ मैले ।

बुटवल, रुपन्देही

# १३

# एक शहरमा एक साता

आइतवार

शहरको एक व्यस्त बसस्टपमा केटाले केटीलाई देख्यो, केटीले केटालाई देखि । दुवैका आँखा एक आपसमा जुधे । केटो केही मुस्कायो, केटी केही लजाई । दुवैका मुटुको धड्कन केही तीव्र भयो । केटोले देख्यो–केटी अप्सरा झैं छे । केटीले मनमनै भनि – कैटो हिरो झैं छ । केही बेरपछि बस आयो । केटी बसमा चढी, सिटमा बसी, बस गुड्यो । केटीले झ्यालबाट टाउको निकाली । केटाले हात उठाएर बाइ ग¥यो । केटीले पनि प्रत्युत्तरमा हात हल्लाई । केटाले धेरैबरसम्म बस गएको दिशातर्फ हेरिरह्यो ।

सोमवारः

केटीलाई देखेपछि केटाको भोक प्यास, निन्द्रा, चैन सबै हरायो । केटीलाई पनि त्यस्तै भयो । केटाले त्यो केटी विना जीवन निरास भएको महशुस गन्यो । केटाले त्यो केटीबिना जीवन निरस भएको महशुस गन्यो । केटाले एक. एम रेडियोको एउटा प्रोग्राममा फोन गरेर भन्यो “हिजो फलानो बस स्टपमा भेटिएकी छुट्टिने बेलामा ’बाइबाइ’ भन्दै जाने लजालु अप्सरालाई उही ठाउँमा भेट्न अनुरोध गर्दै गीत सुनाउन चाहन्छु । रेडियोबाट आएको सन्देश केटीले बुझी । केटी निकै खुशी भई ।

मंगलवार

दिउसो बोलाएको भएपनि केटा र केटी विहाने बस स्टपमा पुगे । दुवै जना महंगा कपडामा निकै आकर्षक देखिएका थिए । केहीबेर दुवैजनाले हेराहेर गरे । आँखाको भाकामा कुराकानी गरे । केहीबेर पछि दुवै जना परिचित भए । केटाले मोटरसाइकल ल्याएको थियो । त्यही मोटरसाइकलमा चढेर दुवैजना शहर नजिकैको एकान्त पार्कमा गए । एकान्त ठाउँमा बसेर केटा र केटीले मिठामिठा कुरा गरे, माया प्रेमका कुरा गरे । केटाले केटीको काखमा टाउको राख्यो । केटीले केटाको छातीमा टाउको टेकाई । पार्कपछि केटा र केटी शहरको महंगो रेष्टुरेन्टमा गए । मोबाईल नम्बर साटासाट गरे । फेसबुकमा एक अर्कोलाई साथी बनाए । साँझपख उनीहरु त्यहाबाट निस्के । केटाले केटीलाई मोटरसाइकलमा राखेर घर पु¥याएर फऱ्यो । घरमा पुग्ने बित्तिकै केटाले केटीलाई मेसेंजरमा लभ ईमोजी पठायो, केटीले किस गरेको ईमोजी पठाई ।

बुधवारः

बिहानै केटा र केटीले लामो च्याटिङ गरे । केटा र केटी दुवै भित्र प्रेमको आगो दन्किदै गयो । केटाले केटी बिना र केटीले केटा बिना बाँच्नै नसक्ने महशुस गरे । एक अर्काविना केटा र केटीलाई आफ्नो जीवन ब्यर्थ लाग्यो । केटालाई छटपटि भयो । ऊ मोटरसाइकल लिएर केटीको घर अगाडि पुग्यो । केटीका आँखा बाटोतर्फ नै थिए । केटाले इशारा ग¥यो । केटीले इशारा बुझी । घरकालाई छलेर केटी एकान्त ठाउँमा पुगी । केटाकेटी

भेट भए । दुवैले माया साटासाट गरे । एक अर्कालि अर्कोबिना बाँच्न नसक्ने कुरा सुनाए । केटा र केटीले भागेर विहे गर्ने निधो गरे ।

विहीवार

केटाले केटीलाई भगायो अर्थात् केटासंग भागी । मन्दिरमा गएर केटाले हात काटेर केटीलाई रगतको सिन्दुर लगाइ दियो । भगवानको मूर्तिको सामुन्ने दुवै जनाले जुनीभर संगै बाँच्ने सँगै मर्ने बाचा बन्धन गरे । केटीलाई पत्नी बनाउन पाउँदा केटोले आफलाई निकै भाग्यमानी र केटालाई पती बनाउन पाउँदा केटीले आफ्नो जीवनको लक्ष्य पुरा भएको सुनाए । त्यस दिन उनीहरु अर्को शरहमा पुगे र त्यहाँको होटलमा उनीहरु हनिमुन मनाए । " तिमि भएपछी मलाई अरु के चाहियो" भन्दै केटिले आफ्नो फेसबुक र टिकटक आईडी डिलिट गरि । केटो मख्ख प¥यो ।

शुक्रवार

साँझपख केटोले आफ्नी नवदुलही अर्थात् केटीलाई आफ्नो घर लग्यो । केटाको घर देख्दा केटी झण्डै मुर्छित भई , किनकि उसको हैन्डसन लोग्नेको घर उसले साँेचे जस्तै महल नभएर झुपडी थियो । गह्रौ मन बनाएर केटीले घर भित्र पाइला टेकी । केटीले घरको कुरा निकाली । केटोले 'केही समयलाई मात्र हो' भनेर कुरा बनायो । त्यो रात लोग्ने स्वास्नीबीच त्यतीसारो गफगाफ र माया साटासाट भएन ।

शनिवारः

विहानपख केटाले केटीको गहना माग्यो, घरको लागि सरसामान किन्न । केटीले गहनाहरु नक्कली भएको कुरा बताई र घर चलाउन मोटरसाइकल बेच्न सल्लाह दिई । केटोले झर्किंदै मोटरसाइकल साथीको हो भन्ने कुरा बतायो । केटो धनी छ, मोज गर्न पाइन्छ भनेको त भिखारी पो रहेछ भन्ने आरोप केटीले लगाई । केटोले पनि धनी केटी फँसाएर ससुरालीको सम्पत्ति खाने जुक्ति निकालेको त कंगाल केटीसंग पो फस्न पुगिएछ भन्ने व्यथा खोल्यो । केटाले केटीलाई गाली गऱ्यो केटीले केटालाई धम्की दिई । झगडा चल्यो । केहीबेर पछि एउटी महिला सानो छोरीलाई डोऱ्याउदै आई । महिलाले केटालाई गाली गरी र केटीलाई मेरो सौता बन्न आएकी कुलच्छिनी भनेर भकुर्न थाली । त्यसैबेला अर्को लोग्ने मान्छे आयो । उसले केटीलाई थप्पड लगायो, गाली गऱ्यो । केटालाई मुखमा थुकिदियो । केटाले जबर्जस्ती ल्याएको हो भन्ने कुरा केटीले लोग्ने मान्छेलाई सुनाई । अर्काको स्वास्नीमाथि आँखा लगाउने लोफर, गुण्डा भन्दै लोग्ने मान्छेले केटोलाई २०–३० मुक्का लगायो । नाक कुच्चाईदियो, एउटा दाँत झऱ्यो । लोग्ने मान्छेले केटीलाई लतार्दै बाटो तर्फ लग्यो र स्वास्नी मान्छेले केटोलाई गाली गर्दै घर भित्र पसी ।

तिलोत्तमा –८, रुपन्देही

# १४

# दुखी अर्थात सुखी

'यो कुरा ठिक भएन ।' मैले भने ।

किन ठिक भएन ?" उ जंगीयो। 'आखीर केही आधार त चाहिन्छनि भनाईको पनि ।' मैले बिस्तारै मोमोमा काँटा गाड्दै भने ।

उसलाई रमले तताउत थालीसकेको थियो। त्यसैले उ जोसीएर कुरा गर्दै थियो ।

'मेरो कुरामा आधार छ ।' एक घुट्को रम निल्दै बोल्यो ।

'छदै छैन।' मैले प्रतिवाद गरें।

'किन छैन ?' उसले आफ्नो मुड्की टेवलमा बजायो । आवाज हलभरी फैलीयो । हलका सबै मान्छेले मलाई हेरें। मैले उठेर पर्दा लगाए।

बातावरण मौन रहयो केही क्षण ।

'म संसारको सबभन्दा दुःखी प्राणी हूँ। यो कुरा म ठोकेर भन्न सक्छु।' अली चकों स्वरमा ऊ बोल्यो।

मैले एक पेग बनाएर उसलाई र मलाई आधा आधा राखें । उसले एकै पटकमा स्वाठ्ठ पार्यो ।

उसले प्लेट हेर्यो. मासु सिध्याएको रहेछ .

'भुटुवा छैन ?' लरखरीएको स्वरमा बोल्यो।

मैले घण्टी थिंचे । एकछिनमा वेयरा केटी हाम्रो सामु थिई। केटी त्यती राम्री पनि थिइन । काली थिई तर हिस्सी परेकी । उचाई ठिक्कै थियो । उसको पहिरन नाममात्रको थियो । एउटा पारदर्शी छोटो फ्रकले उसको तल्लो भाग छोपेको थियो। एक मित्रका सुडौल परेका तिघ्राहरु बाहीरैबाट प्रष्टै देखीन्थे । छाती भन्दा तल एउटा नाम मात्रको कपडा थियो । छातीको मध्यभागमा दुई शिखरहरु उकुस मुकुस भएर बाहीर निस्कन खोज्दै थिए। एउटा पारदर्शी कपडाले छोपीएको थियो तिनलाई तर त्यसका टुप्पा घेराहरु बाहीरै पुष्टै देखीन्थे।

उसले तलदेखी माश्रीसम्म हे-यो केटीलाई। उसलाई रमले छोईसकेको थियो । त्यहै। सुरमा केटीलाई हातमा समातेर तान्यो। केटी उसको काखमा बस्न पुगी।

पर्दा लागेको थियो कसैले देखेन ।

केटी फुत्किएर उभीई। उसले केही प्रतिक्रीय जनाएन । मैले एक प्लेट मुहुवाको अर्डर दिए ।

"तैले त्यसो नगर्नु पर्ने?" मैले भने ।

'तर त्यो त सुखी नै छ नी ।' उसले कुरा अन्तै घुमायो .

केटीले भुटुवा दिएर गैसकेकी थिइ ।

'मैले के भन्दै थिएँ ?' एक चोक्टा मासु मुखमा हाल्दै बोल्यो । म केही बोलिन् ।

'ए त्यो केटी साच्चिकै सुखी छे हैन?" उ बरबरायो।

'कसरी सुखी छे भन त ?' मैले उसलाई सम्झाउन चाहे। 'उ वास्तवमा सुखी छैन देखीनन तैले उसलाई तान्दा कस्ती भएकी थिई ?'

'त्यती बेला उ एकदम सुखी देखीन्थि ।' उ बोल्यो।

'गलत एकदमै गलता'

"कसरी गलत ?' मलाई ठुल्ठूला आँखाले हेर्दै बोल्यो 'देखीनस तैले । ' हलमा देखायो उसले . 'त्यहाँ हेर सबैले एक एकवटी लाई तानेर । काखमा राखेका छन । त्यो केटी हास्दै छे त्यो केटा केटीलाई सुम्सुमाउदै छ । के ति दुबै जना दुखी छन ?'

'छैनन्'

' त्यसो हो भने त्यो केटी पनि दुःखी छैन।'

त्यो केटीको कुरा अर्कै छ ।'उसले मलाई क्वारक्वार्ती हेर्यो ।

'ति केटी केटाहरु प्रेमीप्रेमिका वा पतिपत्नी हुन सक्छन । तर वेटरसंग तेरो सम्बन्ध नै छैन।'

'सुखी हुन सम्बध हुन पर्छ भन्ने हुन्छ ?'

'किन हुदैन ?'

'गलत एकदमै गलत।" उ चिच्यायो त्यो केटी सुखी नै थिई ।'

'कुनै आधार त चाहीयो नि ?'

उसले बोटल हे-यो - सबै रंम सकिएको थियो ।

उसलाई रमले झ्याम्म पारीसकेको थियो। त बोल्न छोडेन ।

'तेरो आधार के छ उ दुखि थिई भन्ने?' मलाई प्रश्न गर्यो उसले।

म केही बेर चुप लागें।

'म उसको भावना बुझ्न सक्छ ।' मैले भने

सायद उसले सुनेन होला । उ टाउको टेवलमा टेकायो।

घडी हेरें - रातको बाह्र बजीसकेको थियो.

'हिंड जाउँ अबेर भयो । ' मैले उसलाई सहारा दिदै उठाए।

काउण्टरमा गएर बिलको पैसा बुझाए। रेस्टुरेण्टमा रौनक बढ्दै गैरहेको थियो. बाहीर हल्का प्रकाश फैलीएको थियो । बाटोमा बाहनको गति उस्तै थियो ।

उ हिंड्दा हिड्दै ठिक उभियो र बोल्यो 'म साच्चै दुःखी छु ।'

'हो' उसलाई समर्थन गरे- उ हिड्छ भनेर .

'झुट ! महा झुट !' उ करायो." संसारमा दुई जना मान्छे दुखी हुन सक्दैन। के त्यो दुःखी छ भने म एकदमै सुखी छु , बुझीस् .• संसारमा एउटा मात्र...'

उसले मुख चलाउँदै थियो - अझै ।

मैले उसलाई हातमा समातेर डोर्याएं ।

उ अझै बोल्दै थियो। म सबभन्दा दुःखी. म ...

२० श्रावण २०५१

# १५

# ५ रुपिया

ज्ञानु दिदी र म एकैसाथ बसमा चढ्यौ । त्यो सानो माइक्रोबसको अघिल्लो सिटमा ज्ञानु दिदी बस्नु भयो अनि म भने केही पछिल्लो सिटमा परे । माईक्रोबसका कन्डक्टरले बसमा चढ्ने वित्तिकै भाडा उठाउन शुरु गर्‍यो । मलाई आपत पर्‍यो । ज्ञानु दिदीले मेरोसमेत भाडा दिनु भयो त्यसलाई समर्थन गर्न मेरो नैतिकताले नदिने, दिदीको भाडासमेत मैले दिन खोज्दा फेरी बसमा मैले चिनेका ३-४ जनाको समेत भाडा मैले दिनुपर्थ्यो, जुन कार्य गर्दा मलाई आर्थिक क्षति हुन्थ्यो । नैतिकता धमिल्याउनु बेश होला कि पर्सको तौल घटाउन भन्ने निधो गर्नको लागि मैले झ्यालबाट बाहिर दृष्टी फ्याँकेर सोच्न थालें ।

कन्डक्टर पछाडि आएन । योगीकूटी आइपुग्दा ज्ञानु दिदी ओर्लनुभयो । ओर्लेपछि हात हल्लाउनुभयो, बस चल्यो ।

ज्ञानु दिदीले भाडा दिएको मैले देखिनँ । दिदीले आफ्नो मात्र भाडा दिनुभयो कि मेरोसमेत कुन्नी ? दिएको भए ठिकै भो- भोलि भाडा तिरी दिएर लेनदेन बराबर बनाउनु पर्ला । मैले मनमनै सोचें ।

कन्डक्टर भाडा उठाउँदै पछाडि गयो तर मसंग भाडा मागेन । अगाडि आउँदा उसले पुलुक्क मलाई हेर्‍यो । 'दिदीले भाडा दिनुभएको रहेनछ, अव भने ५ रुप्पेमा चुना लाग्ने भो' उसले हेर्दा म झस्कें ।

'दिदीले भाडा दिएको भएपनि कमसेकम भाडा नदिनु है भनेर भन्नुपथ्यों नि !' दिदीको अनुपस्थितिमा म दिदीसंग रिसाएँ ।

मेरो भाडा पाउनुभयो कि ? भनेर सोधे भने पनि कन्डक्टरले साँचो कुरा नबताउन सक्छ । दिदीले भाडा नदिएको भए त ठिकै हुन्छ यदि उहाँले भाडा दिनुभएको भए त ५ रुपैयाँ त फोकटमा बर्वाद हुन्छ नि ! पाँच रुपैयाँ कस्को सस्तो छ र ? गाडी रोकिदै चल्दै गरिरहेको छ । मलाई ५ रुपैयाँ भाडा दिन मन पटक्कै छैन । आज मेरो दैनिक बजेट भन्दा २५ रुपैयाँ बढी खर्च भैसकेको छ । बस भाडा ५ रुपैयाँ जोगीयो भने भोलि भाडा तिर्न पुग्छ ।' म मनमनै यति कुरा खेलाउँछु ।

'कस्ता कस्ता बेवकुफ हुन्छन् भने, बसमा चढ्छन् तर भाडा दिन खोज्दैनन् ।' कन्डक्टर कराउँछ । मेरो सातोपुत्लो उड्छ । 'आज इज्जतै जाने भो म डरले पसिनै पसिना हुन्छु ।

कन्डक्टरले गाली गरेको मलाई नभै सानो विद्यार्थीलाई रै छ, मैले सन्तोषको लामो सास फेरें ।

... ......

'तपाँईको भाडा ?' मसँगै बसेको यात्रुलाई कन्डक्टरले भाडा माग्यो ।

'कतिपटक दिने हो र ?' भनेर यात्रुले थर्कायो । कन्डक्टरले मलाई हेर्यो- म उसलाई हेरेर खिस्स हाँसे । कन्डक्टरले यात्रुको अनुहारमा हेरेर भाडा तिरे नतिरेको चिन्न सक्छन् । कन्डक्टर आउँदा डराएको झैं गर्ने, हडबडाउने र टाउको अन्तै घुमाउने हो भने भाडा तिरेको छैन भन्ने पक्का हुन्छ रे ! भन्ने कुरा मैले थाहा पाएको थिएँ त्यसैले म आफूलाई भाडा तिरेको जस्तो निर्भिक

देखाउन उसको अनुहारमै हेरेर मुसुक्क हाँसे । के ठानेर हो कुन्नी ऊ पनि मुसुक्क हाँस्यो ।

'अब भने ५ रुपैयाँ पक्का जोगीनेभयो ।' मेरो मन ढुक्क भयो ।

'कन्डक्टरले मेरो नैतिकता जाँच गर्न भाडा नमागेको पो हो कि ?' मेरो मनको कुनामा अर्को शंका उब्जियो 'भाडा दिनु पर्दैन? ' भनेर झपायो भने त साहै बेइज्जत हुन्छ । सधैं यहि रुटमा हिंडिरहनु पर्छ । कन्डक्टरको गाली खाएपछि यो रुटमा सधै हिड्ने मान्छेसंग आँखा जुधाएर कसरी हिड्न सकिन्छ र ?' सम्भावित घट्ना सम्झेर म डराएँ ।

बेइज्जत हुनु भन्दा त भाडा नै दिनु बेस भनेर मैले पर्स निकालेर हेरे- मेरो पर्समा ५०० रुपैयाँको नोट मात्र रहेछ । ५ रुपैयाँको लागी ५ सय रुपैयाँ दिन अनि मन लागेन । अस्ती मात्र ५ रुपयाँ भाडा भनेर २० रुपैयाँ दिएको थिएँ तर कन्डक्टर त पैसा फिर्ता - नदिई गयो । १५ रुपयाँ त फर्काउन नखोज्ने कन्डक्टरले ४ सय ९५ रुपैयाँ के फकाउला ? ५०० रुपैयाँ लिएपछि मैले लिएकै छैन भन्यो भने म के गर्ने दुब्लो पातलो छु, झगडा गर्न - सक्दिन । पैसा फिर्ता माग्दा ड्राईभर, कन्डक्टर र खलाँसी मिलेर मलाई भकुरे भने म के  गर्ने? कुटाई पनि खाने अनि भाडा नदिई ठग्न खोजेको भन्ने आरोप पनि लाग्ने अनि ५०० रुपैयाँ पनि गुम्ने भयो भने त झन् खत्तमै हुन्छ । यहि कुरा मेरो मनमा खेलीरह्यो । मैले ५ सय रुपैयाँको नोट पर्सबाट निकालेर कन्डक्टरलाई दिन सकिन ।

बसले शंकरनगर पनि नाघ्यो र शारदा स्कूलतर्फ लाग्यो । बसमा अब मसहित ३ जना यात्रु मात्र थियौं । कन्डक्टर र ड्राईभर अगाडि गफ

गरिरहेका थिए । 'अव त कन्डक्टरले भाडा माग्दैन ।' मेरो मनले भन्यो 'सधै कन्डक्टरले ठग्न हुन्छ भने आज मैले ठग्दा के हुन्छ र ?'

म पुरै निश्चित भने थिईन । कन्डक्टरको के भर भयो र ? गाडीबाट ओलंदा सम्झिएर ५ रुपैयाँ माग्यो भने के गर्ने भन्ने मैले सोच्नै सकेको थिइन ।

बस शारदा स्कूल पुगेर रोकियो । म ओर्लदासम्म कन्डक्टरले देखेन । यहि मौकामा भाग्नुपर्छ भनेर म फटाफट हिंडे ।

'ओ दाई ओ दाई पख्नुस त !' म ५०-६० कदम अगाडि हिडीसके पछि कन्डक्टर चिच्यायो ।

'बीच चौराहामा बेइज्जत गर्न पो कन्डक्टरले बसभित्र भाडा नमागेको रहेछ ।' यहि सम्झेर मेरो ओठ तालु सुक्यो । चोकमा ईज्ज़त लिलाम हुनु भन्दा भाग्नु बेस भनेर मैले भाग्ने सुरले झन् छिटो छिटो पाइला सारें ।

'कस्तो नसुनेको ? बहिरो हुनुहुन्छ कि क्या हो ? 'कन्डक्टर दगुर्दै आएर मलाई पछाडिबाट तान्दै करायो ।

मेरो शरीरमा रक्त प्रवाह करिब करिब बन्द भए जस्तो महशुस भैरहेको थियो । म उसलाई हेरिरहें, मुखबाट कुनै आवाज निस्केन ।

'क्या हो पैसा पनि भुलेर हिंड्ने ?' केही ठूलो स्वरमा कन्डक्टर करायो ।

'हँ.. पैसा !' मेरो मुखबाट अरु शब्द निस्केन ।

'तपाइंको दिदीले ५० रुपैयाँ दिनुभएको थियो । मसंग खुद्रा पैसा थिएन त्यसैले तपाईको दिदीले बाँकी रुपैयाँ तपाईलाई फिर्ता दिन भनेर भन्नुभएको

'थियो । यी लिनोस् ४० रुपैयाँ ।' कन्डक्टरले ४० रुपैयाँ मेरो हातमा थमाएर फर्कियो ।

बल्ल मेरो होस खुलेझौं भयो । मैले बसतर्फ - जाँदै गरेको कन्डक्टरलाई हेरें । हातको ४० रुपैयाँलाई हेरें । ज्ञानु दिदीको हातको ईशारा सम्झें अनि मैले ५ रुपैयाँ भाडा जोगाउन भागेको मानसिक कष्टलाई सम्झें। बाटोमा उभिएर मैले आफैलाई गाली गरे- ५ रुपैयाँ भाडा पहिल्यै दिएको भए के हुन्थ्यो र ?

... ..... ............... ..........................

# १६

# मेलामा बदलिएको मन

"यो तरुनी मेला हो, बुझिस ?" व्यापार मेला भित्र पाईला टेक्ने वित्तिकै मैले भने ।

"भेला भएर के गर्नु, मन पर्ने कोही छैनन क्यारे ।" योगेशले आँठ लेप्रायो ।

मलाई थाहा छैन उसको पुर्वजीवन कस्तो थियो? उसले पहिले प्रेममा धोका खाएकोले हो कि अनिच्छाले गदां हो केटीप्रति उसको दृष्टिकोण सकारात्मक हुँदैनथ्यो । सबैले राम्रा भनेका केटीमा पनि उसले कुनै न कुनै दोष देखाइहाल्यो । माया र सुन्दरताको बारेमा उसले प्राय मसंग विवाद गरिरहन्थ्यो । त्यस दिन बडो मुस्किलले मैले योगेशलाई ब्यापार मेलामा पुर्‍याएको थिएँ । त्यहाँ जानुको खासै उद्देश्य त केही थिएन तर म योगेशलाई झुकाउने मौकाको खोजीमा भने थिएँ ।

ब्यापार मेलाका स्टल घुमि सिध्याउन निकै गाह्रो भयो । योगेशले हरेक स्टलमा गर्ने प्रश्न, राख्ने तर्क अनि उत्पादित वस्तुबारे बढी खोजी नीतिले मलाई निकै दिक्क बनायो ।

"अरु ठाउँमा नविकेका सामान बेच्न मेला राखेका हुन्" हरेक स्टलबाट निस्केपछि योगेशले भन्थ्यो । त्यतिमात्र होइन उसले स्टलमा बसेका

सेल्सगर्लहरुको बारेमा समेत टिप्पणी गरिहाल्थ्यो" के के न मैं हूँ भनेर अनुहार देखाउन बसेका नखरमाउलीहरू । "

सबै केटीहरूलाई उसले केही न केही भन्यो । उसको व्यवहार देखेर मलाई डर लाग्यो- "कुनै केटीहरू रिसाएंर गाली गरे भने ?"

मैले योगेशलाई तानेर सांगीतिक कार्यक्रम चलेको मन्च अगाडि पुर्‍याएं । मन्चमा दोहोरी जमेको थियो अनि तल श्रोता र दर्शकहरु गीतमा मस्त थिए । कसैले ताली मात्र बजाएका थिए भने कोही उठेरै नाचेका थिए ।

"वैशले पात्तिएका राँडहरू ।" नाचिरहेकी यौटी युवतीतर्फ लक्ष्य गर्दै उसले बिथ्यामा आक्रोश पोख्यो ।

"जे होस केटी चै राम्री छे ।" मैले भनें ।

"तँ अघिल्लो जुनीमा स्वर्गको ईन्द्र थिइस क्यारे ! केटी देख्यो कि सबै अप्सरा नै लाग्छ । स्वभाविक प्रतिक्रिया जनायो ।

हामिहरु पिंङ खेल्न गयौं . फर्कदा अघि नाचीरहेकी केटीसँग भेट भयो। त्यो केटी योगेशसंग परिचित रहिछन् । उनीहरु धेरै लामो समयपछि भेटिएका रहेछन ।

'केटि च्वांक छ है. तँसंग राम्रो जोडी जम्छ. लाईन मार केटा ' मैले उसको कानमा खुसुक्क भनें । ऊ झनक्क रिसायो ।

औपचारिकतावश मैले नास्ता खाने प्रस्ताव राखें। केटी र उसको साथीसहित अस्थाई रुपमा बनाएको रेष्टुरेण्टमा गयौ । योगेशले चाउमिनमा धेरै सस राखेछ, चाउमिन खानै सकिएन । चाउमिन खाने निहुँमा योगेश र उसको परिचित केटी साथीले धेरै कुरा गरे । केटीको साथी र म उनीहरूको

वार्तालापको श्रोता बनेर बसिरह्यौं । झण्डै एक घण्टाको बसाई निकै दिक्कलाग्दो बन्यो ।

चाउमिन सायद नराम्रो लाग्यो क्यारे, उसलाई । योगेश भन्छ- 'व्यथै भयो ।'

"मान्छेहरूले लभ पार्न लाखौं रुपैयाँ खर्च गर्छन, तैले जाबो सय रुपैयाँ खर्च हुँदा पनि किन पिर मान्छस ?" मैले उसलाई जिस्काएँ ।

"अब अन्त कोही नपाएर त्यस्तीसंग लभ गर्छु नि म ? न अनुहार गतिलो छ न व्यवहार ।" योगेशले अनुहार बिगार्यो ।

"मलाई भने केटी मन पर्यो । भोली पनि चाउमिन खान आउँला अनि बसेर वात गरौंला है .' मैले फेरि उसलाई जिस्काएँ ।

'यस्तो चाउमिन त मेरो कुकरलाई पनि ख्वाउन्न ।' उसले भर्खर खाएको चाउमिन सम्झयो अनि त्यही रेष्टुरेन्टतर्फ फर्केर जोडले थुक्यो । चाउमिन मिठो नभएपनि म खुशी थिएँ किनकी मैले यसलाई केटीसँग जोडेर जिस्काउने विषय भेटेको थिएँ ।

सुत्नै लागेको बेला फोनको घण्टी बज्यो, मैले रिसीभर उठाएँ, फोन गर्ने योगेश पो रहेछ ।

उसले मलाई टि.भी अन गर्न लगायो । उसले भने बमोजिम मैले टि भी अन गरे । टिभीमा मेलाको गतिविधि देखाइरहेको थियो ।

'अधि उनीहरूलाई देखाएको थियो.' योगेशले भन्यो ।

"कसलाई ?" मैले सोधे ।

"उही के चाउमिनवाली" उसको इशारा दिउँसो भेटिएका सुन्दरीहरुतर्फ थियो। टि भी मा पहिलेकै 'सिन' दोहोर्‍यायो । टि भी स्क्रीनमा ती दुई युवतीहरू थिए अनि केही उरन्ठाउला केटाहरूले उनीहरूलाई जिस्काइरहेका थिए।

"कस्ता लफंगा केटाहरू । केही काम नपाएर मेलामा पनि केटी जिस्काउँदै हिंडछन् " सधै केटीहरूलाई दोषी देख्ने उसले यसपाली भने केटाहरुलाई गाली गर्‍यो ।

' मास्साला.....'

"राम्रा केटीहरु देखेपछि हिम्मत भएकाले जिस्काउँछन् नी । सबै तँ जस्ता सन्यासी हुन्छन र ? " मैले योगेशलाई प्रहार गरें। ऊ केही बोलेन ।

भोलीपल्ट फेरि ऊ र म मेला हेर्न गयौं । अघिल्लो दिन जस्तै स्टलहरू घुम्यौ अनि उभिएर लोक दोहोरी प्रतियोगिता पनि हेर्‍यौं ।

योगेश अघिल्लो दिन जस्तो थिएन । ऊ शान्त थियो अनि उसका आँखाले कसैलाई खोजीरहेका थिए ।

"हिजो ती केटीहरूले नमिठो चाउमिन खानुपर्दा के सोंचे होलान ?" बिना प्रसंग योगेशले कुरा कोट्यायो ।

"जे सोचे पनि के भो' र ? फेरि भेट भएमा नाङलोमा लगेर पिज्जा ख्वाउँला त्यसपछि त राम्रो सोचीहान्छन नि ।' मैले भनें ।

त्यो दिन त्यत्तिकै बित्यो, ती केटीहरु भेटिएनन । मेला बाहिर निस्कदा योगेश केही हराएझै कही बिर्से झैं देखिन्थ्यो ।

साँझपख केही काम हुँदैनथ्यो त्यसैले कही दिनपछि फेरि योगेश र म ब्यापार मेला घुम्न गयौ ।

"भगवानले केटीहरूलाई किन यति धेरै राम्रा बनाएका होलान ?" मेलामा पस्ने वित्तिकै उसले भन्यो । उसको मुखवाट पहिलो पटक केटीको प्रसंशा सुन्दा म दंग परें । तर केही बोलीन।

"उनीहरू. आज भेटिन्छन कि ?" उसले मेरो मौनता भंग गर्यो । उसको इशारा चाउमिनवाली केटीहरूतर्फ थियो ।

"क्या हो केटा, उनीहरुको निकै माया लागे जस्तो छ नी" मैले उसलाई जिस्काएँ ।

"ऊ साँच्चै राम्री थिइ हैन ?" उसले सुस्तरी सोध्यो ।

"त्यति राम्री त होइन मैले खासै वास्ता नगरे झै गरी भनें " तर तँसँग राम्रो जोडी मिल्छ ।"

मेरो कुरा सुन्दा उसको मुहारमा अनौठो चमक देखियो । मैले अनुमान लगाए उसको आँखामा प्रेमभाव उलिरहेको थियो। ऊ प्रेममय बनिरहेको थियो । उसले केही दिन अघि भेटिएकी केटीलाई प्रेम गर्न लागेको थियो सायद त्यसैले उसले सबै केटीहरूलाई राम्री देख्न थालेको थियो ।

"मलाइ उसको साहै माया लाग्न थालेको छ ।" यसपाली योगेशले मनको कुरा खोल्यो ।

"तँ जस्तो सन्यासीलाई पनि माया गर्न आउँछ र ?" मैले हाँस्दै भने। ऊ पनि मज्जाले हाँस्यो ।

एक हप्ताको अवधीमा ब्यापार मेलामा केही बलिएको थिएन तर उसको मन भने बदलिएको थियो। उसको मनमा प्रेमको ऑकुरा पलाउँदै थियो । मैले थाहै पाइन-उसको मन कसरी बलियो ?

जनसंघर्ष दैनिक. २०५९ फाल्गुन ३

... ................. ................. ...............

# १७

# अधिकारको खोजि

नारायण आफुलाई निकै सचेत नागरिक ठान्थ्यो । हरेक व्यक्तिले कानूनको परिधिभित्र रहेर आफ्नो जिम्मेवारीको काम गर्नुपर्छ र तोकिएको दायित्व नियमसंगत ढंगले पुरा गर्नुपर्छ भन्ने उसको भनाई थियो ।

धेरै दिनदेखि उसलाई छोराको पठनपाठनमा केही कमि भए जस्तो लागिरहेको थियो । कुरा बुझ्न भनेर एकदिन ऊ छोराको स्कूलमा गयो । स्कूलको वातावरण अनौठो थियो । कक्षामा पढाई भएको थिएन, माड्साबहरु अफिसमा बसेर गफ चुटिरहेका थिए, सुर्ती फिटीरहेका थिए, कोही त चोकमा गएर क्यारमबोर्ड खेलिरहेका थिए ।

शिक्षकको यस्तो चाला देखेर नारायणलाई खपीसक्नु भएन । उसले विद्यालय प्रशासन समक्ष गएर शिक्षकहरुले आफ्नो कर्तव्य इमान्दारीपूर्वक पुरा गर्नुपर्ने सुझाव दियो । तपाईको सुझावलाई विचार गर्नेछौं भनेर हेडसरले नारायणलाई पठाए । केही महिना पछि छोराको रिजल्ट आयो । अघिल्लो सालसम्म कक्षामा प्रथम भएको छोरो यसपाली 'फेल' भयो ।

एकसाँझ भट्टिमा एक जना माड्सावले कुरा फुस्काएछ "बडो जान्ने भा'को नारने ! हामीलाई सल्लाह दिने भा'थ्यो नि, वल्ल थाहा पायो हाम्रो शक्ति !"

माङसावहरुको पूर्वाग्रही कार्य नारायणलाई मन परेन । उनीहरुको गलत क्रियाकलपाको बारेमा नारायणले शिक्षा कार्यालयलाई उजुरी लेख्यो । उजूरी पठाउन हुलाकमा गयो । एघार बजे ऊ पुग्दा पनि हुलाक बन्द थियो ।

बल्लतल्ल एक बजेतिर एक कर्मचारी आएर कार्यालय खोल्यो । जनतालाई सेवा पुर्याउने कार्यालय समयमै किन नखुलेको ? भनेर नारायणले सोध्यो । हुलाक कर्मचारीले विभिन्न वाहानाहरु बतायो। उसले टिकट टांसेर उजूरी पत्र पत्रमञ्जुषामा खसाल्यो । घर फर्कने बेलामा उसले हुलाक कर्मचारीलाई उसको कर्तव्य र जनताको अधिकारको बारेमा सचेत गराउन भने भुलेन ।

केही दिन पछि हुलाक अगाडिको बाटोमा उसले कागजका टुक्राहरु देख्यो । कागजमा लेखेका अक्षर उसले चिन्यो । ती टुक्राहरु त शिक्षा कार्यालयलाई लेखेको उजुरी पत्रका टुक्रा पो थिए । यस्तो कसरी भयो ? भनेर उसले हुलाकमा गएर सोध्यो । हुलाक कर्मचारीहरु जंगीए । नारायणले उनीहरुलाई नागरिक अधिकारको बारेमा बतायो । माथिल्लो निकायमा उजुरी गर्ने धम्की पनि दियो । तर कर्मचारीले टेर पुच्छर लगाएनन् । बरु उल्टै उसैलाई गाली गरेर निकाले । ऊ बाटोमा निस्कदा एउटा कर्मचारीले भन्दै थियो "बढो अधिकारको धाक दिने । हेरौं त अब उसले कसरी चिठी पठाउँदो रै'छ ? उसको चिठी कसले ल्याउने रै' छ ?"

नारायण चुप लागेर बस्नेवाला कहां थियो र ? जिल्लामा भएका ढिलासुस्ती, अनियमितता हेर्ने सबभन्दा ठूलो अधिकारी सिडीओ हुन भन्ने उसलाई थाहा थियो । स्कूल र हुलाकमा भएका गैह जिम्मेवारपूर्ण कार्यको बारेमा उजूरी गर्न ऊ सिडीओ कार्यालय गयो । कार्यालयमा पस्ने बेलामा नारायणलाई प्रहरीले रोक्यो, भित्र जानु पर्ने कारण सोध्यो । नारायणले सबै कारणहरु बतायो । प्रहरीले नारायणसंग सिडीओ सावलाई भेट्ने हो भने सय रूपैयाँ दिनुपर्छ भन्यो । घुस दिनु र घुस खानुलाई नारायणले ठूलो अपराध सम्झन्थ्यो । नारायणले घुस नदिने कुरा सुनायो । प्रहरीले घुस नपाई भित्र घुस्न दिएन । केहीबेर दुवैबीच भनाभन भयो । हुलहुज्जत गर्न लागेको

भनेर प्रहरीले गोली चलायो । नारायणको छातीमा गोली लाग्यो, तर मर्न चाहि ऊ मरेन । घाइते अवस्थामै ऊ केही दिन प्रहरी खोरमा थुनियो ।

आफन्तहरुको सोर्सफोर्सले गर्दा एकदिन ऊ प्रहरी खोरबाट छुट्यो । प्रहरीको गोली लागेर बनेको चोटको उपचार गर्न उसका परिवारले नारायणलाई अस्पताल लगे । अस्पताल त नाम मात्रको थियो । डाक्टरहरु अस्पतालमा नबसी क्लिनिकमा धाउंथे । नर्सहरु अफिसमा बसेर उपन्यास पढ्थे वा मोबाईलमा झुण्डिएर प्रेमालाप गर्थे । विरामीलाई उनीहरुले नोकरलाई झै झपार्थे, उपचार गर्न गएका विरामी उपचार नपाएर मर्थे । केही दिनसम्म अस्पताल बेडमा बसेर नारायणले पनि उपचार गरायो । तर उसले पनि भनेजस्तो उपचार पाएन । ऊ झनझन सिकिस्त हुदै गैरहेको थियो । आजित भएपछि ऊ एकदिन सकिनसकि अस्पताल प्रमुखको कार्यालयमा गएर अस्पतालमा भैरहेको ढिलासुस्तीको बारेमा बतायो । समयमै राम्ररी उपचार पाउने विरामीको अधिकार हो भन्ने कुरा उसले सुनायो । अस्पताल प्रमुखले सकारात्मक जवाफ दिएर उसलाई पठाए ।

साँझपख केही नर्सहरु नारायणलाई लिन आए । उनीहरु निकै रिसाएका देखिन्थे । नारायणलाई उनीहरुले अप्रेशन थिएटरमा लगे । त्यहां डाक्टरहरु पहिले नै तम्तयार भएर बसेका थिए । नारायणले देख्यो डाक्टरहरु पनि निकै रिसाएका छन् । केहीबेरपछि एनेस्थेसियाको सुई लगाएर उसलाई डाक्टरहरुले बेहोस बनाए । गोली छातीमा लागेको थियो तर डाक्टरहरुले नारायणको पेट चिरे, नारायणको आन्द्राभुँडी खोतले, किड्नी काटेर हेर, केहीबेर मुखामुख गरे । अनि रिपोर्ट लेखे पहिले नै 'किड्नी ड्यामेज भएकोले यहां उपचारं हुन नसक्ने ।'

डाक्टरहरुले आन्द्राभुँडी पेटभित्र राखेर काटेको ठाउँमा सिलाए । केही समयपछि नारायणको होस् खुल्यो । नर्सहरुले नारायणलाई आफन्तको जिम्मा लगाए ।

नारायणले वरिपरि हेर्यो । उसले केही बोल्न खोज्यो, ओठ थर्थराए मात्र तर आवाज निस्केन ।' हेर्दाहेर्दै नारायणको धड्कन बन्द भयो । आफन्तले आत्तिएर नर्सलाई गुहारे । केही समयपछि आएकी नर्सले डाक्टरलाई गुहारिन् । एक घण्टापछि डाक्टर आए, नारायणको नाडी छामे अनि उसलाई मृत घोषित गरेर फर्के ।

नारायण मरे पनि उसका आँखा खुलै थिए । उसले केही भन्न खोजेझैं देखिन्थ्यो । बोल्न सक्ने भए उसले अवस्य नै भन्ने थियो अधिकारको खोजी गर्दा म मर्न पुगे । यो देशमा कागज र भाषणमा बाहेक अन्त कतै अधिकारको खोजी नगर्नु कर्तव्य र इमान्दारिताको आशा नगर्नु ।

मेचीकाली संदेश २०५९ बैशाख १

# १८

# मानवता हराउदा

बस बीच सडकमै घ्याच्च रोकियो ।

'के भयो ? सबै यात्रीले एकै स्वरमा सोधे ।

"एक्सिडेन्ट भए जस्तो छ । " ड्राइभरले ओर्लिंदै भन्यो । ड्राईभर बसबाट ओर्लेपछि हतारहतार अरु यात्रीहरू पनि ओर्ले । सबैले सडकको किनारामा हेरे । सडकमा केही कागजपत्रहरू छरिएका थिए । सडकभन्दा केही तल खोल्सामा रहेको झ्यांगमा एउटा झोला अड्किएको थियो अनि सडकबाट धेरै तलको भिरालो ठाउँमा मोटरसाइकल पल्टिएको थियो ।

" मान्छे त कतै देखिन्न नि ? " एक्सीडेन्ट भएको हो भन्ने लक्षण बुझेपछि बसको यात्रीमध्येको एक विनयले सबैले सुन्ने गरी आफैसंग प्रश्न गयो ।

मान्छे कतै देखिन्छ कि भनेर सबैले वरपर हेरे । बसको ड्राइभरले सडक छेवैको ढिस्कोमा उभिएर तल हेर्यो । संयोगबस उसले पखेराको एक ठूलो ढुंगाको आडमा सुतेको मान्छे देख्यो । उसले यो कुरा अरुलाई पनि सुनायो । सबैले अग्लो ठाउँमा उभिएर एक्सिडेन्टमा परेको मान्छेलाई हेरे । सडक र त्यो मान्छेबीचको दुरी धेरै थियो त्यसैले कसैले पनि त्यो मान्छे घाईते वा मृत के छ भन्ने अड्कल गर्न सकेनन् ।

"विचरा ! के भएर यस्तो भा'होला नी ?" बसका एक वृद्ध यात्रीले भने ।

"निकै स्पिडमा चलाएको थियो होला, मोड काट्न नसकेर गुल्टियो होला । " एउटाले अड्कल लगायो ।

"काट्नै नसक्ने मोड त यहाँ छैन । बरु त्यो मान्छेलाई राम्ररी मोटरसाइकल चलाउन नै आउथेन होला, त्यसैले गुल्ट्यो ।" अर्कॉले थप्यो ।

सबैले एक्सिडेन्टको संभावित कारण भनिरहेका थिए ।

"मोटरसाइकललाई कुनै गाडीले ठोकेर कुलेलम ठोक्यो होला ।"

"बढ्ता धोकेर बाइक ड्राइभ गरेको थ्यो' होला साला । बल्ल माटो चाट्न पुग्यो । "

"पछाडि च्वाँक मैयाँलाई राखेर गफ गर्दै बाइक चलाएको थियो होला, त्यसैले बाटो छोडेर भीरमा पुग्यो ।"

कसैले मोटरसाइकललाई दोष दिए,कसैले सडकलाई त कसैले सडक छेउको भट्टी पसल अनि सरकारलाई.

"एक्सिडेन्ट हेर्न भनेर गाडी रोक्छन् त्यहीबेला लुट्न पाइन्छ भनेर नाटक गरेको पनि हुन सक्छ ।" एउटा केटाले शंका गर्यो । सबैजना झसंग भए ।

"माओवादीले हामीलाई अल्मल्याएर एम्बुस थाप्ने दाउ लगाएको पनि हुनसक्छ ।" अर्को समसामयिक शंका गयो । माओवादी र एम्बुसको नाम सुन्ने बित्तिकै धेरैको अनुहारको रंग बदलियो । ओर्लिएका आधा यात्री बसभित्र पसे । अड्कलमा विभिन्न फूलबुट्टा थपिए । कसैले पनि एक्सिडेन्टमा परेको मान्छेको हालखबर बुझ्न जाने आवश्यकता नै देखेन ।

"ए मान्छे त ज्यूदै रहेछ ।" ढिस्कोमा उभिएको विनयले चिच्यायो "उसले त उभिएर यतै हेरेको छ ।" सबैले घाईते मान्छेलाई देखे । घाईते मुस्किलले उभिएको थियो । उसको अनुहार र कपडामा रगतका दाग जस्ती देखिन्थ्यो तर त्यहाँबाट रगत लागेको अनहार प्रस्ट चिनिन्थ्यो ।

"हेल्लो म्यान कम अप " दिनेशले ठूलो स्वरले चिच्यायो ।

"त्यो मान्छे त माधव जस्तो छ यार । " विनयले घाईतेलाई हेर्दै भन्यौं ।

"को माधव ?" सबैले सोधे ।

"दिनेशको भाई, माधव क्या ।" विनयले बतायो ।

"बच्चू, तँलाई कुरीनटारको कोदोको झोल अलि बढी नै लागे जस्तो छ ।" दिनेशले हाँस्दै भन्यों" तैले पचाउन सक्दैनस् धेरै नतान् भनेकै थियौं नि । त्यसबेला मानेन । त्यसैले गर्दा अझैसम्म पनि हयाङ मैं छ । "

"कोदोको झोल पेटमा हल्लियो होला त्यसैले काठमाण्डौमा भएको माधवलाई यहाँ देखेको छ ।" अर्को साथीले थप्यो । उसको कुरा सुनेर सबैजना ' गलल्ल हाँसे ।

'कस्तो नपत्याएको ?' विनय झोक्कियो । तल भीरमा भएको घाईते पीचबाटोमा उक्लने असफल प्रयास गरिरहेको थियो । उसले दुवै हातको इशारा गरेर सहयोग मागेको जस्तो देखिन्थ्यो ।

"विचराले मद्दत मागे जस्तो छ । " बसका एक बृद्ध यात्रीले भने "जानोस् न उसलाई ल्याउनोस् ।

"आ.... बुढा बा कस्ले झमेला बेसाउंछ ?" डाईभरले भन्यौं । घाईते मान्छे लग्दा पुलिस इन्क्वाइरी हुन्छ । पुलिसले अनावश्यक दुःख दिन्छ । हस्पिटल लग्दालग्दै मर्यो भने आफै पर्न पनि सकिन्छ । यस्तो दुःख किन गर्ने ? छोडिदिउँ उसलाई ल्याउने कुरा । मरे मरोस् देशमा दिनहुँ सयौं मानिस मरेका छन् भने यो मरेर के हुन्छ र ? अबेला भयो सबै बसमा बस्नुस् ।"

ड्राईभरको कुरामा सहमत भएर सबैजना बसमा चढे ।

"दिनेश हिड्न जाउँ उसलाई लिन ।" बसमा चढ्न लागेको दिनेशलाई रोक्दै विनयले भन्यो .

" विचरा ज्यूँदै रहेछ । उसलाई ल्याएर समयमै अस्पताल पुर्‍याउन सकियो भने कमसेकम उसको ज्यान त बँच्छ नि ।"

"ओहो.... मनकामना मन्दिर गएर आएपछि विनय त निकै धर्मात्मा पो भए जस्तो छ नि बडा अर्काको भलाईको कुरा गर्दैछ ।" दिनेशले हाँस्दै भन्यों " साधु महाराजजी यस्ता कुरा छोड्नोस । दुनियाँ घाईतेलाई उद्दार गर्न आएका हौं र हामी ? अरु कसैले लगे लान्छ नत्र यंही मर्छ । हाम्लाई के फरक पर्छ र ?

'छोड्दिनोस् भाई, बसमा बस्नोस् बरु चाँडै गजुरी पुगेर पुलिसलाई खबर गरौंला । " ड्राईभरले गाडी स्टार्ट गर्दै भन्याँ ।

"प्लीज दिनेश एकपटक उसलाई सडकमा त ल्याएर छोडौ त्यसपछि जाउंला नि ?" विनयले अनुरोध गयो । "धेरै सन्काहा नबन है विनय । " दिनेशले झर्किंदै भन्यों ।" गाडीमा क्या च्वाँक च्वाँक छप्कीहरू छन् । उनीहरूसंग

बस्न छोडेर चिन्नु न जान्नुको मान्छेलाई उद्दार गर्न कोही जान्छ ? तँलाई मद्दत गर्न मन छ भने जा मत बस चढें ।"

विनयबाहेक सबैजना बसमा चढे । सबैले विनयलाई सन्काहा भनेर हाँसोमा उडाए । विनय बस चढेन बरु घाईते तर्फ गयो ।

विनयलाई छोडेर बस बिस्तारै गुड्यो । बसबाट सबैले देखे-घाईते मान्छेले दुवै हातको इशाराले बसलाई रोक्न आग्रह गर्दै थियो । "पिर नगर भाइ, तिम्लाई लिन यमराजले पजेरो पठाउँदै छन् होला ।" झ्यालबाट टाउको निकाल्दै दिनेश चिच्यायो उसको करा सुनेर बसभित्रका सबै हाँसे । बसले गति लियो र केही समयमै घट्नास्थलबाट टाढा पुग्यो ।

साँझपख

दिनेशको घरको फोनको घण्टी धेरै बेरसम्म बज्यो । दिनेशले अल्छी मानीमानी फोन उठायो ।

"तँ छिट्टो अस्पताल आउनु पर्यो ।" उताबाट विनयले आत्तिएको आवाजमा भयो ।

"किन ?" दिनेशले सोध्यो ।

"अरु कुरा पछि गरौंला । तै छिटो अस्पतालमा आइज । तेरो भाइ अस्पतालमा छ ।" विनयले फोन राखु अघि भन्यौं ।

भाइ अस्पतालमा भएको कुरा सुनेर दिनेश केही आत्तियो । भाइ कहाँ गएको छ भनेर उसले आमालाई सोध्यो । काम परेकोले मोटरसाइकल लिएर पोखरा गएको छ भन्ने जवाफ पायो ।

"बाटोमा एक्सिडेन्ट परेको आफ्नै प्यारो भाइ त हैन ?" दिनेशको मनमा चिसो पस्यो । अज्ञात भयले उसको शरीर थरर्र काँप्यो । कपडा राम्ररी लगाउने होस पनि उसमा रहेन । उ बाटमा निस्केर ट्याक्सी चढेर हतार-हतार विनयले बोलाएको अस्पताल पुग्यो । दिनेशले थाहा पायो-एक्सिडेन्टमा परेको उसको भाइको प्राणपखेरु उडिसकेको थियो ।

विनयले भन्दै थियो तिमीहरूले छोडेर गएपछि मैले भाइलाई बल्लतल्ल सडकमा ल्याएँ । उसको टाउकोमा धेरै चोट लागेको थियो । तत्कालै अस्पताल त्याउन साधन पाइएन । बल्लबल्ल एउटा ट्रकमा राखेर भाइलाई ल्याएँ तर अस्पताल ल्याउन ढिलो भैसकेको रहेछ ।

दिनेशले राम्ररी केही सुन्न सकेको थिएन । उसको आँखा वरपर आफ्नो प्यारो भाइ उनीहरूले छोडेर आएको घटनास्थल घुमिरहेको थियो । उसले एकपटक साँच्यो-बिनयक कुरा मानेको भए उसको भाइ बाँच्ने थियो कि ? उसले भाइको मृत शरीरलाई र विनयलाई - पालैपालो हेयो । हेर्दा हेर्दै उसलाई रिंगटा लाग्यो र भाइको लाशमाथि घोप्टियो ।

"के भएको हो ?" कोठामा आएका एक परिचितले सोधे ।

'मानवता हराएको परिणाम' बिनय विस्तारै फुस्फुसायो .

मेचीकाली संदेश

२०५९ बैशाख २९

# १९

# सुन्माया

हेलू बजार अघि बस रोकिन्छ । केहि पेसेन्जरहरु ओर्लन्छन . मलाई सिट छोड्ने जाँगर चल्दैन । म झ्यालबाट टाउको निकालेर बरुड खोला र आँधीखोलाको दोभानतर्फ एकटकले हेरिरहन्छु ।

'सिट खाली हो ?' एउटा झीनो आवाज सुनिन्छ ।

'अँ' मैले छोटो जवाफ दिन्छु र आफ्नो दृष्टि बदलेर कुनातर्फ सर्छु । प्रश्नकर्ता खाली सिटमा वसेको आभाष पाउँछु केहिबेरमा बस फेरि गन्तव्यतर्फ गुड्छ । बसले हेलु बजारको पुछार छोडीसकेपछि वल्ल मैले मेरो नयाँ यात्रा मित्रलाई हेर्छु । मलाई देखेर मेरो यात्रा मित्र केहि हच्किए झै लाग्छ । मेरो यात्रा मित्रको रुपमा एउटी केटी मसंगै बसेकी छ । केही कालो वर्णको रुप, मैलिएको कपाल, अनि शरीरमा केहि पुराना जस्ता देखिने तर सफा लुगा । 'उमेर १३-१४ वर्ष हुनुपर्छ' केटाकेटीसंग मैले विताएका ५ वर्षे अनुभवको आधरमा म अङ्कल लगाउँछु । तर केटी केही टाक्सिएकी छे । अर्थात् उ त्यति उमेरकि देखिन्न । मेरो यात्रा साथीको अनुहार मैले कतै देखेजस्तो लाग्छ । म उसलाई हेर्छु मात्र तर केहि बोल्दिन ।

'तपाई कुमार दाई हैन ?' बयरघारी आईपुग्दा मेरो यात्रामित्रले अनायासै सोधी । उसको मुखबाट मेरो नाम सुन्दा अचम्मै लाग्यो । मैले केहि बोल्न नभ्याउँदै उसले फेरि भनि 'मलाई चिन्नुभएन ? म सुन्माया, राधा कि वहिनी ।'

मैले चिनें। मेरो यात्रामित्र सुन्मायालाई । मैले ५ वर्ष पहिले अर्जुनचौपारीमा भेटेको थिएँ । मैले भेट्दा ऊ सानै थिई । त्यसबेला देखि अहिलेसम्म मैले उसलाई भेटेको थिईन त्यसपछि म कैयौं पटक अर्जुन चौपारी गएपनि सुन्मायाको बारेमा कुनै सोधखोज नै गरेको थिईन ।

बस गुडीरहेको छ, सुन्माया र मबीच सामान्य वार्तालाप चलिरहेको छ । सुन्माया भैरहवा जान हिंडेकी रहिछ-आफ्नो साथीलाई भेट्न ।

'कहिले फर्कन्छौ अर्जुन चौपारी ?' मैले कुरैकुरामा सोधें. सुन्मायाले जवाफ दिईन् । उसले म तर्फबाट ध्यान हटाएर अर्को छेउको झ्यालबाट बाहिर हेर्न थाली ।

जवाफ नपाएपछि मैले फेरि सोधे- 'सुन्माया, तिमी कहिले फर्कन्छौ ? धेरै बेरपछि सुन्मायाले सानो स्वरमा भनि 'म अब फर्कन्न ।'

मैले नसोंचेको जवाफ सुन्दा मलाई अचम्म लाग्यो । आफ्नो कौतुहलता मेट्न मैले सुन्मायासंग नफर्कने कारण सोधे । सुन्माया मतर्फ फर्किई । उसको अनुहारमा व्यथाका लहरहरु दौडीरहेको महशुस भयो मलाई । मेरो अनुहारमा एक टकले हेरेर उसले ब्यथीत स्वरमा भनिः 'मेरो आफ्नो भन्ने को छ यहाँ र ? म कसको घरमा फर्कने ?"

मलाई थाहा भएसम्म सुन्मायाको परिवार पहाडी बजारको सम्पन्नै परिवार थियो । उनीहरुको आफ्नै ब्यापार थियो, घर थियो, जग्गा थियो । अनि सुन्मायाको लागि सबभन्दा आवश्यक पर्ने आमा बा समेत थिए । तरपनि अहिले सुन्मायाले आफ्नो केही नभएको कुरा गर्दै आफ्नो वस्ने ठाउँ नभएको कुरा गर्छ । मलाई सुन्मायाको कुरा निकै उदेकपूर्ण लाग्छ।

बस वालिङ्ग आएर रोकिन्छ । म ओर्लेर नास्ता खान्छु । मैले कर गर्दा पनि सुन्मायाले ओर्लेर नास्ता खान मान्दिन । म केहि फलफूल किनेर बस चढ्छु र सुन्मायालाई दिन्छु । केहिवेरको विश्राम पछि बस फेरि गुड्छ ।

मैले सुन्मायालाई निकै आग्रह गर्छु तर ऊ केहि बोल्दिन । बरु उसको आँखा रसाउँछन् । मैले हेर्दा हेर्दै उसका आँखाका डील नाघेर आँशुका डल्लाहरु गालामा हामफाल्छन् । म अडकल गर्छु-सुन्मायालाई गहिरो चोट परेको छ।

धेरैबेरसम्म हामीहरु बोल्दैनौ । बस गुडीरहेके छ, सबै यात्रीहरु आफ्नै धुनमा छन् । कसैको पनि ध्यान हामीतर्फ पुगेकै छैन । केहिबेरमै बस गल्याङ्ग पुग्छ । अर्थात मेरो आधा यात्रा पूरा हुन्छ । अकस्मात सुन्माया पग्लिन्छे । उसले दुपट्टाले आँसु पुच्छे , अनि आफू घर नजानुको कारण भन्न तयार हुन्छे । म खुसी हुन्छु सुन्मायाको कारण थाहा पाउने भएँ भनेर ।

सुन्माया शुरु गर्छे, "मेरो आमाबाले बजारमा ब्यापार गरेर वस्नुहुन्छ । म उहाँहरुकी माइली छोरी हु । म गर्भमा छँदा आमा बालै छोरा जन्मिन्छ भनेर भन्नुहुन्थ्यो रे । तर, म जन्में । मेरो जन्मले मेरा बा आमालाई खुसी बनाएन । म जन्मदैदेखि मलाई उहाँहरुले हेलाँ गर्न थाल्नुभयो । म पछि अब २ वटी बहिनी पनि जन्मे । दिदी बहिनी सबैले आमाबाको मायाँ पाए । तर, मैले उहाँहरुबाट सधैभरी अवहेलना मात्र पाए । मलाई उहाँहरुले सधै काली, नराम्री, कुलच्छिनी भनेर गाली गरिरहनुहुन्थ्यो । घरमा मैले जति काम गरेपनि मैले नै बढी सजायँ पाउँथें । समाजको गाल टार्न मलाई स्कूल त पठाउनु भयो तर घरमा बसेर लेखपढ् गर्ने मौका कहिल्लै दिनुभएन । दिदि वहिनीहरु सिंगारिएर घुम्थे, तर म योंत्रा कपडा लगाएर घरमै काम

गरिरहन्थें । म काली, नराम्री भएपनि उहाँहरुकै छोरी त हुँ नी । फेरि म जन्मिन्छु भनेर पनि उहाँको कोखमा जन्मिएकी होईन । उहाँहरु मेरो पनि बा आमा भए चाहिं मैले पनि त अरु दिदी बहिनीले झै आमा पाउनुपर्ने होईन र ? आफ्ना सबै सन्तान समान हुन्छन् हैन र कुमार दाई ?'

'त्यसो त नहुनु पर्ने । जे जस्तो भएपनि आफ्ना सन्तानको मायाँ त सबैलाई हुन्छ है।' म सुन्मायाको कुरालाई समर्थन गर्छु ।

सुन्मायाले फेरि कुरा अघि बढाउँछे: "जे जस्तो गरेपनि आफ्नै आमा बा थिए । दिदी वहिनीलाई जस्तै मलाई पनि बा आमाले माया गरे हुन्थ्यो भन्ने आशा सँधै लाग्थ्यो । दिदी वहिनीलाई जस्तो राम्रो कपडा र पैसा भन्दा मलाई बा आमाको मीठो बोली र मायाको / चाहनाहुन्थ्यो । तर, मेरो बा आमाको माया लेखेको रहेन छ । बा आमाले मलाई मावल वस्न पठाए । मावलमा पनि मैले मायाँ पाईन । मामा माइजुले मलाई सँधै गाली गर्ने, काम गराईरहने र नोकरलाई जस्तो व्यवहार गर्थे । मावलको वातावरण मन नपरेर फर्केर घर गएँ । घर गएकोमा आमा बा दुबै मिलेर पिट्नुभयो । 'मावलको नपचेको' भनेर गाली गर्नुभयो । अनि फेरि मावल नै लगेर छोड्नु भयो । मैले जति दुःख गर्नुपरेको भएपनि मलाई मामा माईजुले भान्जीको रुपमा हेरेर माया गरेको भए कम से कम मेरो मन रमाउँथ्यो नि ! तर मेरोलागि घर पनि उस्तै मावल पनि उस्तै । घरमा म छोरी हुन सकिन मावलका म भान्जी हुन सकिन । म कतै केहि हुन्न नसकेपछि यहाँ किन फर्कने !'

आफ्नो मनको वह पोखेर नसिध्याउँदै उसका दुबै आँखाबाट बलिन्द्रधारा आँशु खस्छन् । ऊ सुक्क-सुक्क गर्छ । वरपरका मान्छेले हामीतर्फ हेर्छन ।

सुन्मायाले टाउको मेरो काधँमा टेकाउँछे । उसलाई सान्त्वना दिन उसको पिठ्यू थप्थपाउँछु । सुन्मायाको रोदन देख्दा मेरा आँखा रसाउँछन् ।

सुन्मायाले आँशु पुछेर म तर्फ हेर्छे । म उसंग आँखा जुधाएर हेर्न सक्दिन । म आफ्ना दृष्टिलाई तल बग्दै गरेको गण्डकी किनारामा पुर्‍याउँछु ।

'भैरहवा मेरो साथीको घर छ । मेरो साथी र उसको आमाबाले मलाई निकै माया गर्छन् । सुन्माया तँ पनि मेरो छोरी नै होस् दुःख पर्दा हामीलाई सम्झेर आउनु भन्नुहुन्थ्यो -अर्जुन चौपारीबाट सरुवा भएर जाँदा । अर्कोपटक भेट्दा पनि त्यही भन्नुहुन्थ्यो ।' सुन्मायाले आफ्नो साथीको बारेमा मलाई बताउँछे ।

'म त्यहीं जोन्छु ।' सुन्माया भन्छेः 'उनीहरुले राखे भने त्यहीं बस्छु । नभए कतै भाँडा माझ्ने काम खोजेर भए पनि त्यतै बस्छु । घर त म कहिल्लै फर्कन्न ।"

म आफुलाई सुन्मायासंग तुलना गर्न सक्दिन. मायाको भने रिक्तता र मायाको अभावले मलाई निकै कमजोर बनाउँछ । सुन्मायालाई बुझ्न नसक्ने उसका आमा बा र मामा माइजुसंग निकै रिस उठ्छ । म मनमनै उनीहरुलाई धिक्कार्छु। सुन्मायाको अवस्था र भावना बुझेपछि मनमा ऊप्रति अपार माया उर्लन्छ ।

मेरो घरमा ४ जना मात्र छौं । तीनजना त जागीरको लागि घर वाहिर नै बढि समय विताउछौं । दिनभरी घरम आमामात्र बस्नुहुन्छ ।" केटाकेटी नहुँदा घर नरमाइलो हुदो रै'छ । कुनै केटाकेटी घरमा राख्न पाए दिनभरी ऊ स्कूल गए पनि विहान साँझ घरमा सघाउँथ्यों, गफ गर्थ्यो र घर रमाइलो पाथ्यों । मलाई साथी हुने कुनै केटाकेटी खोजेर ल्याउ न ।"

आमाले सधैं भन्नुहुन्थ्यो । संयोगवश आज सुन्माया फेला परेकी छे । उसलाई लगे आमाले साथी पाउनुहुन्थ्यो, सुन्मायाले पढ्न पाउथी । यहि कुरा सुनाउँदै म सुन्मायालाई भन्छु' 'सुन्माया मेरी बैनि बनेर मेरो घरमा बस्छ्यौ ?'

मेरो प्रस्ताव सुनेर सुन्माया खुसी होली भन्ने लागेको थियो तर उसको मुहारमा त खुसीका कुनै लक्षण नै देखिएनन् । मलाई उदेक लाग्छ । मैले उसको अनुहारको भाव बुझ्न सक्तिन ।

बस दौडीरहन्छ र सगसंगै मेरो मनमा नानाथरी भावहरु दौडिन्छन् । म आतुर हुन्छु- सुन्मायाको जवाफ सुन्न । तर सुन्माया केहि बोल्दिन । मैले फेरि सुन्मायासंग प्रस्ताव राख्न सक्दिन । न त ऊसंग जवाफ नै सोध्न सक्छु ।

बसले राम्दी पुल तर्छ । हेर्दा हेर्दै बस आर्यभन्ज्याङ र वर्तुङ्ग पार गरेर ओरालो लाग्छ । झण्डै डेढ घण्टासम्म मेरो यात्राभित्र सुन्मायासंग बोलचाल हुदैन ।

'कुमार दाई ।' सुन्मायाले मौनतालाई तोड्दै भन्छे, 'मलाई तपाँईको घरमा नोकर्नी राख्नुहुन्छ ?' उसको अप्रत्यासित सोधाईले म अक्क न मक्क पर्छु । के भन्ने उसलाई ? उसले के भनेकी हो ? मैले केहि बुझ्नै सक्तिन ।

सुन्माया फेरि बोल्छे - 'मलाई नोकर्नी बनाएर राख्नुस् है । मैले सबै काम जानेकी छु । भात पकाउन, भाँडा माझ्न, कपडा धुन, घाँस काट्न । म तपाइलाई कुनै दुःख दिन्न ।'

'के भनेकी 'सुन्माया तिमीले ?' म अचम्म मान्दै सोध्छु । 'मलाई नोकर्नी होईन घरलाई रमाइलो  बनाउने बहिनी चाहिएको छ । आमालाई साथी चाहिएको छ । मेरो घरमा तिमी नोकर्नी भएर वस्नु पर्दैन ।'

सुन्मायाले मतर्फ एकोहोरो हेरीरहन्छे । उसको जवाफ नआउँदा फेरि एकपटक म भित्रभित्रै कमजोर हुन्छु ।

'म तपाईको छोरी र वहिनी भएर बस्दिन ।' सुन्मायाले अनायासै भनी।

'किन ?' म सोध्छु ।

"मलाई तपाईहरुले छोरी वा वहिनी भन्दा मलाई छोरी र बहिनीकै स्थानमा वस्न पाउने रहर हुन्छ, त्यस्तै मायाको आशा हुन्छ । मैले आफ्नो घरमा त छोरीको स्थान पाउन सकिन भने अन्त कसरी पाउँछु ? मैले छोरी भएर पनि छोरीले पाउने माया पाउन सकिन भने तपाईको घरमा कसरी खुसी हुन सक्छु र ? मलाई नोकर्नी बनाएर राखुभयो भने त मैले छोरीको स्थान र मायाको आशा नै गर्दिन । म नोकर्नी हुँ भन्ने भावना मनमा आएपनि म दुःखी छु भन्ने महशुस त हुँदैन नी ।'

सुन्मायाको कुरा सुनेर म आफू भासीदै गएको महशुस गर्छु । म आफूलाई सानो र सुन्मायालाई ठूलो ठूलो बन्दै गएको देख्छु । म सुन्मायासंग बोल्न सक्तिन । म के भनेर बोल्ने ? सुन्मायालाई मैले कसरी सम्झउने ? म आँखा चिम्लन्छु र सुन्मायाका अभिभावकहरुलाई सम्झन्छु, सुन्मायाको चाहना र ऊ भित्रको रिक्ततालाई महशुस गर्ने असफल प्रयास गर्छु । बस गुडीरहन्छ- तिनाउ खोलाको तिरैतिर र सुन्माया गुड्छे । तर म गुड्न सक्तिन, सुन्मायालाई समातेर उड्न पनि सक्तिन ।

जनसंघर्ष दैनिक , २०५८ चैत्र ३

# २०

# शोकदानी

एकाबिहानै शहरभरि यौटा हल्ला फैलियो -"शहरको यौटा चउरमा मानिसको लास भेटियो रे !" गाइँगुइँ चल्यो, कुरा कांग्रेसी नेताको कानमा पनि पुग्यो ।

"कम्निस्टे उग्रवादीहरुले हाम्रा कार्यकर्ताको हत्या गरेको हुनुपर्छ ।" उसले फोनबाट २-४ जना अन्य नेतालाई समेत यो कुरा सुनायो । अन्य कांग्रेसी नेताहरु उसको कुरामा सहमत भए । जुलुस लिएर लास हेर्न जाने र लास बोकेर शहर परिक्रमा गर्ने कार्यक्रम नेताहरुले बनाए ।

"यो त ज्यादती नै हो । बीच सडकमा देखिएको लास हाम्रै पार्टीको सक्रिय कमरेडको हो । हामीले हत्याको विरोध गर्नेपर्छ । सरकारका विरुद्धमा कडा संघर्ष गर्नुपर्छ ।" शहरमा लास देखिएको खबर सुनेपछि एमालेका शहरी नेताले भन्यो । २-४ जना निमित्त नेताहरुले उसको कुरामा सहमति जनाए । हत्याको विरुद्धमा आजैदेखि संघर्ष शुरु गर्ने निर्णय भयो र नेताहरु कार्यकर्ता जुटाउनतर्फ लागे ।

"राजाका भरौटेहरुले हाम्रा क्रान्तिकारी योद्धाको पाशविक हत्या गरे । हत्यारालाई हामीहरुले 'सफाया' गर्नुपर्छ । हाम्रा योद्धाको लासलाई हामीहरुले अन्तिम सलामी दिनुपर्छ । " जनयुद्ध चकाइरहेको माओवादीका स्थानीय कमाण्डरले निकै आक्रोशित भएर भन्यो ।

कसैले बजारमा भेटिएको लास पूर्वपन्चको हुन सक्ने अड्कल गरे अनि कसैले सो लास 'मधिसे' कै हुनुपर्छ भनेर ठोकुवा गरे । '

शहरमा लास भेटिएको कुरा अर्को शहरमा पनि पुग्यो । त्यो लास विदामा घर गएको आफ्नो कर्मचारीको हुन सक्ने ठहर त्यो शहरमा रहेका सेना र प्रहरीले गरे । लास लिन जानको लागि आवश्यक व्यवस्था मिलाउनको लागि उनीहरुले केन्द्रमा जाहेरी गरे ।

दिउँसोपखसम्म कांग्रेस, एमाले, माओवादी, राप्रपा र सद्भावना पक्षधरहरु शहरका बेग्लाबेग्लै स्थानमा जम्मा भए । झण्डा हल्लाउँदै, नारा घन्काउँदै सबै राजनीतिक दलका कार्यकर्ताहरु लास रहेको स्थानतर्फ लागे ।

मृतप्रायः बनेको शहरमा एक्कासि चहलपहल बढ्यो । चारैतर्फदेखि राजनीतिक दलहरुको जुलुस आएको देखेर लासको वरिपरि झुम्मिएका केटाकेटीहरु भागे ।

"वीर शहिद - अमर रहुन."

'हत्यारालाई-फाँसी दे !" निकै आक्रोशित जुलुस नारा घन्काउदै चउरमा पुग्यो । लासलाई घाटमा पुर्‍याउने मलामी (सहयोगी) नपाएर लास नजिक बसेर लास कुरुवाको मनमा सहयोग पाउने आशा पलायो ।

"हजुर यसलाई घाटमा पुर्याउन सहयोग गरिदिनु पर्यो ।" लास कुरुवाले जुलुस टाढैबाट अन्तै लाग्छ कि भनेर ठूलै स्वरले पुकारा गर्यो ।

"तपाईले चिन्ता लिनु पर्दैन । हाम्रो कार्यकर्ताको लागि हामीहरु ज्यान दिन तयार छौं ।" झण्डा बोकेर अगाडि आएको एमालेको नेताले जोस्सिँदै भन्यो ।

"यो लास हाम्रो कांग्रेसका सक्रिय कार्यकर्ताको हो ।' चारतारे झण्डा बोकेको कांग्रेसी चिच्यायो ।

'मधिसेको हत्याको विरुद्ध हामी एकजुट भएर आएका छौ .' झट्ट हेर्दा भारतको जस्तै देखिने झण्डा बोकेको अर्को नेताको गर्जदै भन्यो । त्यसैगरी राप्रपा पक्षधरहरुले चउरको लास आफ्नो पार्टीको पुराना कार्यकर्ताको भएको कुरा बताए ।

सबै पार्टीका कार्यकताहरुले त्यहाँ भएको लास आफ्नो मान्छेको हो भन्ने बताएपछि त्यहाँ झण्डै भिडन्तको स्थिति आयो ।

"खबरदार जनताका शत्रुहरु !" कसैले गोजीबाट पेस्तोल निकालेर आकाशतर्फ फायर गर्दै गर्जदै भन्यो । बहस गरिरहेको सबै जना डरले चुपचाप भए । "यो लास हाम्रा महान क्रान्तिकारी योद्धाको हो । जसले उहाँलाई कायरतापूर्वक हत्या गरे, उनीहरुलाई हामीहरुले सफाया गरेरै छोड्छौ ।" पेस्तोल समातेको ठिटो चिच्याएपछि ऊ माओवादी रहेछ भन्ने सबैले थाहा पाए ।

रक्तपात हुने भयले लास कुरुवा नराम्ररी काँप्यो । उसले हात जोडेर विनम्र हुँदै भन्यो, " हजुर तपाईहरु नलड्नोस् । यो मान्छे कांग्रेस, कम्निस्ट, पन्च र सद्भावना होइन । हजुर यो त..... ।" उसको कुरा पूरा नहुँदै हातमा पेस्तोल समातेको ठिटो चिच्यायो "सुन्यौ भरौटे हो ! यो लास तिमीहरु जस्ता लाछीहरुको साथी होइन । यो मान्छे त हाम्रो हो हाम्रो ।"

"हजुर या मान्छे माओवादी पनि होइन " डराईडराई लास कुरुवाले भन्यो ।

"को हो त यो ?" सबैले एकैपटक सोधे ।

"सेना वा पुलिस हुनुपर्छ ।" सिभिल ड्रेसमा आएको प्रहरीले विस्तारै भन्यो

लास कुरुवा विस्तारै लास नजिक बस्यो । लासको अनुहार झिंगाले ढाकेको थियो । उसले हातैले झिंगा धपायो अनि एकपटक सबैलाई हेरेर विस्तारै बोल्यो "यो मान्छे कुनै पार्टीको मान्छे होइन । यसलाई त राजनीति भनेको कुरा पनि थाहा थिएन । यो त नेपाली जनतामात्र भएर बाँचेको थियो । मरीमरी काम गर्दा पनि उसले कहिल्यै अघाउन्जेल खान राम्रो लगाउन पाएन । ऊ भोकले बिरामी परेपछि पनि सम्पत्ति नभएकोले ओखतीमूलो गर्न सकेन । अस्पतालले उसलाई भर्ना लिएनन् डाक्टरले उसलाई जाँचेनन् । रोग, शोक र भोकले भौतारिदै हिँड्दा ऊ यहाँ आएर मरेको हो, हजुर । ऊ नेपाली जनता मात्र हो अरु केही होइन ।"

लासकुरुवाको कुरा सुनेर भर्खरसम्म लासमा आफ्नो हकदाबी गरेका नेताहरु आफ्ना समर्थकहरुसँग मुखामुख गरे । झिंगा भन्किएको लासलाई घोरिएर हेरे ।

"हाम्रो मान्छे रै'नछ, व्यर्थैमा दुःख पाइयो." यौटा नेताले भर्खरसम्म हल्लाइरहेको झण्डालाई बटार्दै बोल्यो अनि ऊ आफूहरु आए कै बाटोतर्फ फर्कियो । सबै दलका नेता र जोशिला कार्यकर्ताहरु पनि विस्तारै लासदेखि टाढिदै गए ।

"हजुर, त्यसै नजानोस् । दया गरी यो लासलाई घाटसम्म पुर्‍याउन सहयोग गर्नोस् । " लासकुरुवाले सहयोगको पुकार गर्दै सबै नेता र कार्यकर्तालाई फर्काउनको लागि उनीहरुतर्फ दगुर्‍यो । तर उसको बिलौना कसैले सुनेनन् । लासमाथि हकदावी गर्न आएकाहरु टाढिँदै गए, लासकुरुवा पनि उनीहरुको - पछिपछि दगुरिरह्यो ।

साँझसम्म लास उठाउन कोही आएन । सहयोग माग्न गएको लास कुरुवा पनि फर्किएन । राति अबेर चउरमा स्याल कराएको सुनियो । जुनको उज्यालोमा स्यालहरु नाचेको पनि देखियो . भोली बिहान हेर्दा लाश थिएन । लासको ठाउँमा मैलो धब्बा थियो अनि मासुका केही चोक्टा र हड्डीहरु चउरमा छरिएका थिए ।

मेचीकाली संदेश

२०५९ मङ्सिर २८

"

## लेखक परिचय




**युवराज कंडेल**

तिलोत्तमा नगरपालिका-८, रुपन्देही

शिक्षा: स्नातकोत्तर / पिएचडी शोधार्थी

लेखन: वन, वातावरण र पर्यटन विषयमा विभिन्न पत्रपत्रिका र जर्नलहरुमा १५०० भन्दा बढी लेखहरु प्रकाशन

ईमेल: yrkandel@gmail.com